# प्राक्कथन

सार्वजनिक संस्थानको क्षेत्रगत अवस्था, वित्तीय कार्यसम्पादनको विश्लेषण, व्यवस्थापकीय पक्ष र विनिवेश भएका संस्थानको अवस्था साथै सार्वजनिक संस्थान व्यवस्थापनका विविध पक्षको अध्ययन तथा मूल्याङ्कन गरी संस्थान सञ्चालनमा देखिएका समस्याको विश्लेषण, चुनौती र सुधारका क्षेत्रलाई समावेश गरी अर्थ मन्त्रालयले आर्थिक वर्ष २०७९/८० को **सार्वजनिक संस्थानको वार्षिक स्थिति समीक्षा, २०८१** प्रकाशनमा ल्याएको छ।

आधारभूत वस्तु तथा सेवामा गुणस्तर कायम गरी सुपथ मूल्यमा उपलब्ध गराउने, उत्पादन र वितरणमा स्वस्थ प्रतिस्पर्धात्मक वातावरण सिर्जना गर्ने, उपलब्ध साधन र स्रोतको समुचित उपयोग गरी मूलुकको द्रुततर विकास गर्न सघाउ पुर्‍याउने, विकासका पूर्वाधार निर्माण गर्ने लगायतका उद्देश्यले नेपालमा सार्वजनिक संस्थानको स्थापना गरिएको थियो। समिक्षा अवधिमा वित्तीय क्षेत्रका सार्वजनिक संस्थानको समग्र अवस्था सन्तोषजनक रहेतापनि अन्य क्षेत्रका संस्थानको अवस्था मिश्रित रहेको छ। सरकारको शेयर तथा ऋण लगानी, संस्थानको कार्यसम्पादनस्तर, प्राप्त प्रतिफल र कोषमा व्यवस्था नगरिएको दायित्वको रकम समेत विश्लेषण गर्दा सार्वजनिक संस्थानको सञ्चालन तथा व्यवस्थापनमा सुधार गर्न जरूरी देखिएको छ। नीतिगत तथा व्यवस्थापकिय सुधार मार्फत सार्वजनिक संस्थानहरुको समग्र पक्षको सुधार गर्दै राज्यले अवलम्बन गरेको समाजवाद उन्मूख अर्थतन्त्रलाई टेवा पुग्ने गरी सार्वजनिक संस्थानको व्यवस्थापन तथा सञ्चालन गर्नु आजको आवश्यकता छ ।

सार्वजनिक संस्थान स्थापना र सञ्चालनमा आएको आठ दशकभन्दा बढि भएको सन्दर्भमा अर्थतन्त्रको संरचना र नीतिमा आएको परिवर्तन तथा सार्वजनिक संस्थानको व्यवस्थापकीय कमजोरीसमेतका कारण कतिपय संस्थानहरू समस्याग्रस्त रहे पनि पछिल्लो तथ्याङ्कको विश्लेषण गर्दा सार्वजनिक संस्थानको कार्यसम्पादनको स्तर समग्रमा सन्तोषप्रद र सुधारोन्मुख रहेको छ। सरकारी स्वामित्वमा नै राख्न आवश्यक देखिएका संस्थानको कानूनी र व्यवस्थापकीय पक्ष सुधार गरी व्यावसायिक स्वायत्तता प्रदान गर्न जरूरी देखिएको छ। सञ्चालनमा रहेका संस्थानको अनुगमन र मूल्याङ्कन प्रणाली प्रभावकारी बनाई अझ बढि जिम्मेवार, पारदर्शी र जवाफदेही बनाउन अपरिहार्य देखिएको छ।

अन्त्यमा, नेपालका सार्वजनिक संस्थानको बारेमा जानकारी राख्न चाहने सबै सरोकारवालालाई यो प्रकाशन उपयोगी हुने विश्वास लिएको छु। सार्वजनिक संस्थानको वार्षिक स्थिती समिक्षा,२०८१ तयार गर्ने क्रममा तथ्याङ्क, सूचना एवंम् विवरण उपलब्ध गराई सहयोग गर्ने सबै निकायका पदाधिकारी/कर्मचारी र लेखन तथा विश्लेषण कार्यमा संलग्न मन्त्रालयका कर्मचारी लगायत सबैमा हार्दिक धन्यवाद दिन चाहन्छु।

**वर्षमान पुन 'अनन्त'**
**अर्थमन्त्री**

**जेठ, २०८१**

# विषय सूची

# तालिका सूची

# चित्र सूची

## कार्यकारी सारांश

१. नेपालमा नागरिकको दैनिक जीवनयापनसँग प्रत्यक्ष सम्बन्ध रहेका अत्यावश्यक बस्तु तथा सेवा सर्वसुलभ एवं सुपथ मुल्यमा उपलब्ध गराउने, रोजगारी सृजना गर्ने, विकासका पूर्वाधारहरू तयार गर्ने, आत्मनिर्भर र स्वाधिन अर्थतन्त्रको विकास गर्ने, आयात प्रतिस्थापन तथा निर्यात प्रवर्द्धन गर्ने, निजीक्षेत्रको विकासको वातावरण तयार गर्ने तथा समतामूलक राज्यको स्थापना गरी सामाजिक न्यायको प्रवर्द्धन गर्ने उद्देश्यका साथ वि. सं. १९९० को दशकदेखी सार्वजनिक संस्थान स्थापनाको शुरूवात भएको पाइन्छ।

२. नेपालमा पहिलो सार्वजनिक संस्थानको रूपमा वि.सं. १९९३ मा विराटनगर जुट मिलको स्थापना भएको थियो। तत्पश्चात् योजनाबद्ध रूपमा प्रथम पञ्चवर्षीय योजना (वि.सं. २०१३ – वि.सं. २०१८) को अवधिमा सार्वजनिक संस्थानको स्थापनाले गति लिएको देखिन्छ। हाल अस्तित्वमा रहेका सार्वजनिक संस्थानको संख्या ४४ पुगेको छ। जसमा औद्योगिक क्षेत्रमा १०, व्यापारिक क्षेत्रमा ४, सेवा क्षेत्रमा ११, सामाजिक क्षेत्रमा ५, जनोपयोगी क्षेत्रमा ५ र वित्तीय क्षेत्रमा ९ सार्वजनिक संस्थान अस्तित्वमा रहेका छन्। स्वामित्वका आधारमा हेर्दा २० वटा नेपाल सरकारको पूर्ण स्वामित्वमा र २४ वटा अधिकांश स्वामित्वमा रहेका छन्।

३. २०८० असार मसान्तसम्म कायम रहेका ४४ संस्थान मध्ये कम्पनी ऐन बमोजिम स्थापना भएका ३३ वटा, विशेष ऐन बमोजिम स्थापना भएका ७ वटा, सञ्चार संस्थान ऐन बमोजिम स्थापना भएका २ वटा, सहकारी ऐन बमोजिम स्थापना भएका १ वटा र संस्थान ऐन बमोजिम स्थापना भएको १ वटा संस्थान रहेका छन्।

४. आर्थिक वर्ष २०७८/७९ मा संस्थानको कुल सञ्चालन आय रू. ५ खर्ब ७५ अर्ब ४३ करोड ५५ लाख रहेकोमा आर्थिक वर्ष २०७९/८० मा १४.८७ प्रतिशतले वृद्धि भई रू. ६ खर्ब ६१ अर्ब १ करोड २९ लाख पुगेको छ।

५. आर्थिक वर्ष २०७९/८० मा अस्तित्वमा रहेकामध्ये २६ वटा संस्थानले नाफा आर्जन गरेका छन् भने १५ वटा संस्थान घाटामा रहेका छन्। ३ वटा संस्थानको कारोबार शून्य रहेको छ।

६. आर्थिक वर्ष २०७८/७९ को तुलनामा सार्वजनिक संस्थानको समग्र खुद नाफामा ३०४६.२० प्रतिशतले वृद्धि भई आर्थिक वर्ष २०७९/८० मा रू.४८ अर्ब ५१ करोड ७५ लाख कायम भएको छ। यसरी नाफा उच्च वृद्धि हुनुमा नेपाल आयल निगममा आ.व.२०७८/७९ मा ३८ अर्ब १७ करोड ७८ लाख घाटा रहेकोमा आ.व.२०७९/८० मा रू.११ अर्ब ७२ करोड ३० लाख नाफामा रहनु मुख्य कारण हो। आर्थिक वर्ष २०७९/८० मा नाफामा सञ्चालित २६ संस्थानको गत वर्षको तुलनामा खुद नाफा ९८१.४० प्रतिशतले बढेको छ भने नोक्सानीमा सञ्चालित १५ संस्थानको गत वर्षको

तुलनामा खुद नोक्सानी २.८१ प्रतिशतले बढेको देखिन्छ। सार्वजनिक संस्थानको प्रशासनिक खर्च २३.७९ प्रतिशतले बढेको छ।

७. आर्थिक वर्ष २०७९/८० मा शेयरधनी कोष (नेटवर्थ) गत आर्थिक वर्षको तुलनामा २९ प्रतिशतले वृद्धि भई रू.९ खर्ब ८२ अर्ब १३ करोड १७ लाख पुगेको छ। समीक्षा अवधिमा ३२ वटा संस्थानको शेयरधनीकोष धनात्मक र बाँकी १० वटाको शेयरधनीकोष ऋणात्मक रहेको छ।

८. नेपाल सरकारको कुल लगानी गत आर्थिक वर्षको तुलनामा ८.६२ प्रतिशतले वृद्धि भई रू.६ खर्ब ६१ अर्ब १० करोड ७४ लाख पुगेको छ। गत आर्थिक वर्षको तुलनामा शेयर लगानी ९.१९ प्रतिशतले वृद्धि भई रू.३ खर्ब ७९ अर्ब ७२ करोड १६ लाख पुगेको छ भने ऋण लगानी ७.८६ प्रतिशतले कमी आई रू.२ खर्ब ८१ अर्ब ३८ करोड ५८ लाख पुगेको छ।

९. आर्थिक वर्ष २०७९/८० मा कोषमा व्यवस्था नभएको दायित्व गत आर्थिक वर्षको तुलनामा ११.६३ प्रतिशतले वृद्धि भई रू. ५२ अर्ब ८७ करोड २ लाख पुगेको छ भने सम्भावित दायित्व ४४.८३ प्रतिशतले बढेको छ।

१०. सार्वजनिक संस्थानमा आ.व.२०७८/७९ को तुलनामा चुक्ता पुँजी १०.६२ प्रतिशतले वृद्धि भई आर्थिक वर्ष २०७९/८० मा रू. ४ खर्ब १२ अर्ब १२ करोड ८१ लाख पुगेको छ। जसमा नेपाल सरकारको पुँजी लगानी ९२.१३ प्रतिशत र अन्य संस्थान तथा निजी क्षेत्रको ७.८७ प्रतिशत शेयर स्वामित्व रहेको छ।

११. आर्थिक वर्ष २०७९/८० को कुल गार्हस्थ्य उत्पादन रू. ५३ खर्ब ८१ अर्ब ३४ करोडमा सार्वजनिक संस्थानको कुल सञ्चालन आयको अनुपात १२.२८ प्रतिशत रहेको छ।

१२. नेपाल सरकारले प्राप्त गरेको कुल आयकरमा आर्थिक वर्ष २०७८/७९ मा संस्थानको योगदान ५.५९ प्रतिशत रहेकोमा आर्थिक वर्ष २०७९/८० मा ६.९७ प्रतिशत पुगेको छ। आर्थिक वर्ष २०७९/८० मा नेपाल सरकारको सञ्चितकोषमा सार्वजनिक संस्थानले कुल रू.१७ अर्ब ३९ करोड ४६ लाख आयकर दाखिला गरेका छन्।

१३. आर्थिक वर्ष २०७९/८० मा सार्वजनिक संस्थानमा ३२,१८० जनाले प्रत्यक्ष रोजगारी प्राप्त गरेका छन्। जनोपयोगी क्षेत्रका संस्थानमा सबैभन्दा बढी १३,३७७ जना र सामाजिक क्षेत्रका संस्थानमा सबैभन्दा कम १,४०८ जना कार्यरत छन्।

१४. आर्थिक वर्ष २०७९/८० मा संस्थानको सञ्चित नाफामा १६.६८ प्रतिशतले वृद्धि भई रू.६१ अर्ब १४ करोड ९६ लाख पुगेको छ।

१५. सञ्चालनमा रहेका संस्थानमध्ये सात वटा संस्थान नेपाल स्टक एक्सचेञ्ज लि. मा सूचीकृत छन्। कुल बजार पुँजीकरणमा सूचीकृत सरकारी संस्थानको हिस्सा २०८० असार मसान्तमा १८.३२ प्रतिशत रहेको छ।

१६. निजीकरण गरिएका १८ वटा सार्वजनिक संस्थान मध्ये १० वटा संस्थान नाफामा सञ्चालनमा छन्।

१७. निजीकरण ऐन बमोजिम खारेज भएका १२ संस्थानमध्ये हालसम्म कृषि चुन उद्योग लि. को मात्र कम्पनी रजिष्ट्रारको कार्यालयमा दर्ता खारेजी भई कानूनी रूपमा अस्तित्व समाप्त भएको छ। कृषि औजार कारखाना लि. बन्द रहेकोमा नेपाल सरकार, मन्त्रिपरिषद्को मिति २०७९ भाद्र ३१ को निर्णयानुसार यसलाई राष्ट्रिय आविष्कार केन्द्रलाई सञ्चालन गर्न दिइएको छ भने अन्य खारेजीमा परेका सार्वजनिक संस्थानको कानूनी प्रक्रिया पूरा हुन सकेको छैन।

१८. सार्वजनिक संस्थानको प्रशासनिक खर्च आर्थिक वर्ष २०७८/७९ मा रू.३५ अर्ब ४६ करोड ४७ लाख रहेकोमा आर्थिक वर्ष २०७९/८० मा २३.७९ प्रतिशतले वृद्धि भई रू. ४३ अर्ब ९० करोड १८ लाख रहेको छ।

१९. २० वटा संस्थानले आ.व.२०७९/८० सम्मको लेखापरीक्षण गराएका छन् भने अन्य २४ वटा संस्थानले नियमित लेखापरीक्षण गराएका छैनन्।

२०. आर्थिक वर्ष २०७९/८० मा उच्च खुद नाफा आर्जन गर्ने पाँच सार्वजनिक संस्थानमा क्रमशः नेपाल आयल निगम लि., नेपाल विद्युत प्राधिकरण, नेपाल दूरसञ्चार कम्पनी लिमिटेड, नागरिक लगानी कोष र निक्षेप तथा कर्जा सुरक्षण कोष रहेका छन्।

२१. आर्थिक वर्ष २०७९/८० मा उच्च नोक्सान भएका पाँच सार्वजनिक संस्थानमा क्रमशः नेपाल वायुसेवा निगम लि., नेपाल खानेपानी संस्थान, दुग्ध विकास संस्थान, उदयपुर सिमेन्ट उद्योग लि. र नेपाल टेलिभिजन रहेका छन्।

# खण्ड एक
# सार्वजनिक संस्थानको समग्र अवस्था

## १.१ सार्वजनिक संस्थानको अवधारणा

बजार संयन्त्रले प्रभावकारी रूपमा कार्य गर्न नसकेको कारण सन् १९३० को दशकमा देखिएको विश्वव्यापी आर्थिक मन्दी पश्चात अर्थ व्यवस्थालाई योजनाबद्ध विकासको माध्यमबाट सञ्चालन गर्ने उद्देश्य अनुरूप विश्वमा सार्वजनिक संस्थानको स्थापना शुरू भएको देखिन्छ। द्वितीय विश्वयुद्धपश्चात स्वतन्त्र भएका मुलुकहरूमा निजी क्षेत्र सबल र सक्षम भई नसकेको र पूर्वाधार विकासको अवस्था कमजोर रहेको हुँदा सरकारले नै नागरिकको दैनिक जीवनयापनका लागि आवश्यक वस्तु तथा सेवा व्यवस्थापनमा अग्रसर हुनुपर्ने, युद्धको कारणबाट प्रभावित मुलुकमा पुनर्निर्माण र विकास आयोजना संचालन गर्न समेत सरकारको भूमिका सशक्त हुनुपर्ने पृष्ठभूमिमा संसारभर सार्वजनिक संस्थानको विस्तार भएको पाइन्छ।

नेपालमा नागरिकको दैनिक जीवनयापनसँग प्रत्यक्ष सम्बन्ध रहेका अत्यावश्यक वस्तु तथा सेवा सर्वसुलभ एवं सुपथ मुल्यमा उपलब्ध गराउने, रोजगारी सृजना गर्ने, विकासका पूर्वाधार तयार गर्ने, आत्मनिर्भर र स्वाधिन अर्थतन्त्रको विकास गर्ने, आयात प्रतिस्थापन तथा निर्यात प्रवर्द्धन गर्ने, निजीक्षेत्रको विकासका लागि उपयुक्त वातावरण तयार गर्ने तथा समतामूलक राज्यको स्थापना गरी सामाजिक न्यायको प्रवर्द्धन गर्ने उद्देश्यका साथ वि. सं. १९९० को दशकदेखि सार्वजनिक संस्थान स्थापनाको शुरूवात भएको पाइन्छ।

## १.२ नेपालमा सार्वजनिक संस्थानको विकास

विश्वव्यापी लहरसँगै नेपालमा पनि आन्तरिक पुँजी परिचालनका साथै विकास साझेदारहरूको सहयोगमा राज्यको स्वामित्वमा उद्योग कलकारखाना स्थापना भएको देखिन्छ। योजनाबद्ध विकासको परिप्रेक्ष्यमा आर्थिक, सामाजिक र पूर्वाधार विकासका लक्ष्य हासिल गर्न सार्वजनिक संस्थान स्थापना भएको देखिन्छ।

नेपालमा पहिलो सार्वजनिक संस्थानको रूपमा वि.सं. १९९३ मा विराटनगर जुट मिलको स्थापना भएको थियो। त्यसपश्चात् योजनाबद्ध रूपमा प्रथम पञ्चवर्षीय योजना (वि.सं. २०१३ – वि.सं. २०१८) को अवधिमा सार्वजनिक संस्थानको स्थापनाले गति लिएको देखिन्छ। प्रथम योजना अवधिमा सार्वजनिक संस्थानको संख्या ८ रहेको थियो। यस अवधिमा वित्तीय, व्यापारिक एवं औद्योगिक क्षेत्रका नेशनल ट्रेडिङ्ग लिमिटेड, दि टिम्बर कर्पोरेशन अफ नेपाल, नेशनल कन्स्ट्रक्सन कम्पनी लगायतका संस्थान स्थापना भई सञ्चालनमा आएका थिए। चौथो पञ्चवर्षीय योजना अवधिमा संस्थान स्थापना द्रुत गतिमा अगाडि बढेको पाइन्छ। सातौं पञ्चवर्षीय योजना (वि.सं.२०४२- वि.सं.२०४७) को

अन्त्यसम्ममा सरकारको पूर्ण वा अधिकांश स्वामित्व भएका संस्थानको संख्या ६२ पुगेको थियो। विश्वव्यापी लहरसँगै नेपालले पनि वि.सं.२०४० को दशकको उत्तरार्द्धदेखि आर्थिक उदारीकरणको नीति अनुसरण गरेको देखिन्छ। वि.सं २०४७ सालको राजनीतिक परिवर्तन पश्चात आठौं योजना अवधिमा सरकारी स्वामित्वका संस्थान निजीकरण गर्ने कार्यले तिव्रता पायो। दशौं योजनाको अन्त्यसम्ममा करिब डेढ दर्जन संस्थान निजीकरण तथा एक दर्जन संस्थान खारेजी गरियो। एघारौं योजना अवधि (सन् २००७-२०१०) मा सार्वजनिक संस्थानको संख्या ३६ कायम भएकोमा पछिल्लो समयमा आवश्यकताअनुसार केही नयाँ सार्वजनिक संस्थान स्थापना भएका छन् भने एउटै उद्देश्य भएका केही संस्थान गाभिएका छन्।

हाल अस्तित्वमा रहेका सार्वजनिक संस्थानको संख्या ४४ पुगेको छ। शेयर पूँजीमा ५० प्रतिशत भन्दा बढी सरकारको नियन्त्रणात्मक स्वामित्व भएका निकायलाई मात्र सार्वजनिक संस्थानको रूपमा लिने अभ्यास अन्तर्गत हाल औद्योगिक क्षेत्रमा १०, व्यापारिक क्षेत्रमा ४, सेवा क्षेत्रमा ११, सामाजिक क्षेत्रमा ५, जनोपयोगी क्षेत्रमा ५ र वित्तीय क्षेत्रमा ९ सार्वजनिक संस्थान अस्तित्वमा रहेका छन्। जनकपुर चुरोट कारखाना लि. बुटवल धागो कारखाना लि., नेपाल इञ्जिनियरिङ्ग कन्सल्टेन्सी सेवा केन्द्र लि., नेशनल कन्स्ट्रक्सन कम्पनी नेपाल लि. र नेपाल ओरियन्ड म्याग्नेसाइट प्रा.लि. कानुनी रूपमा अस्तित्वमा रहेतापनि ती संस्थानले हाल कुनै व्यावसायिक कारोबार गरेका छैनन्। नेपाल मेटल कम्पनी लि. स्थापना भएदेखि हालसम्म सञ्चालनमा आएको छैन। केही वर्षयता जलविद्युत उत्पादन तथा प्रसारण लाईन, सार्वजनिक निर्माण र औद्योगिक क्षेत्रमा लगानी गर्दै जाने सरकारको नीतिअनुरूप थप नयाँ सार्वजनिक संस्थान स्थापना भएका छन्। धौबादी फलाम कम्पनी लि. र नेपाल पूर्वाधार निर्माण कम्पनी लि. पछिल्ला समयमा स्थापना भएका सार्वजनिक संस्थान हुन्।

## १.३ सार्वजनिक संस्थानको गठन तथा व्यवस्थापन

नेपालमा सार्वजनिक संस्थान विभिन्न ऐनद्वारा गठन भएको देखिन्छ।२०८० असार मसान्तसम्म कायम रहेका ४४ संस्थान मध्ये कम्पनी ऐन बमोजिम स्थापना भएका ३३ वटा, विशेष ऐन बमोजिम स्थापना भएका ७ वटा, सञ्चार संस्थान ऐन बमोजिम स्थापना भएका २ वटा, सहकारी ऐन बमोजिम स्थापना भएका १ वटा र संस्थान ऐन बमोजिम स्थापना भएको १ वटा संस्थान रहेका छन्। यी संस्थानको कार्यसञ्चालनका लागि प्रबन्धपत्र, नियमावली र विनियमावलीका प्रावधानहरू समेत फरक-फरक रहेका छन्। संस्थान सञ्चालनका लागि आवश्यक जनशक्तिको पदपूर्ति प्रक्रिया र वृत्ति विकासका विषयमा नेपालको संविधान बमोजिम लोक सेवा आयोगले यस सम्बन्धी मापदण्ड तयार गरी लागू गरिसकेको हुँदा यस विषयमा धेरै हदसम्म एकरूपता कायम भएको छ। तथापि, सार्वजनिक संस्थान अनुसार कर्मचारीको सेवा सुविधामा विविधता कायमै रहेको छ। कर्मचारीको कार्यसम्पादनस्तरसँग सेवा सुविधालाई आवद्ध गर्न सकिएको छैन। संस्थान सञ्चालन तथा व्यवस्थापनमा साधारणसभा, सञ्चालक समिति र व्यवस्थापन समूह गरी तीन तहको संरचना रहेको

छ। साधारणसभा अन्तर्गत रहने सञ्चालक समिति संस्थानको समग्र सञ्चालन तथा व्यवस्थापकीय कार्यमा जवाफदेही हुने गर्दछ। कम्पनी ऐनअनुसार स्थापना र सञ्चालन भएका संस्थानको सञ्चालक समितिमा कम्तिमा ५(पाँच) र बढीमा ११(एघार) जना सदस्य रहने प्रावधान छ भने विशेष ऐन र अन्य सम्बन्धित ऐनका आधारमा स्थापना भएका संस्थानको सञ्चालक समिति सदस्य संख्या संस्थानको प्रकृतिअनुसार फरक फरक भएको पाइन्छ।

सार्वजनिक संस्थानको कार्य प्रकृतिका आधारमा प्रत्येक संस्थानको सम्पर्क मन्त्रालय तोकिएको छ। सार्वजनिक संस्थानले नेपाल सरकारसँग सम्पर्क र समन्वय सम्बन्धित मन्त्रालय मार्फत गर्ने गर्दछन्। मन्त्रालयगत रूपमा उल्लेख गर्दा हाल अस्तित्वमा रहेका संस्थानमध्ये उद्योग, वाणिज्य तथा आपूर्ति मन्त्रालय सम्बद्ध १४, अर्थ मन्त्रालय सम्बद्ध ९, भौतिक पूर्वाधार तथा यातायात मन्त्रालय सम्बद्ध ५, ऊर्जा, जलस्रोत तथा सिँचाइ मन्त्रालय सम्बद्ध ३, सञ्चार तथा सूचना प्रविधि मन्त्रालय सम्बद्ध ३, संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालय सम्बद्ध ३, कृषि तथा पशुपन्छी विकास मन्त्रालय सम्बद्ध २, वन तथा वातावरण मन्त्रालय सम्बद्ध २, शहरी विकास मन्त्रालय, खानेपानी मन्त्रालय र शिक्षा, विज्ञान तथा प्रविधि मन्त्रालय सम्बद्ध १/१ संस्थान रहेका छन्। सार्वजनिक संस्थानको लगानी, विनिवेश, सुविधा निर्धारण, समन्वय र अनुगमन तथा मूल्याङ्कनको कार्य अर्थ मन्त्रालयको कार्यक्षेत्र अन्तर्गत रहेको छ। हाल अस्तित्वमा रहेका सार्वजनिक संस्थानको गठन तथा ती संस्थानको व्यवस्थापन सम्बन्धी विस्तृत विवरण तालिका ५.२२ मा प्रस्तुत गरिएको छ।

## १.४ स्वामित्व संरचना

आर्थिक वर्ष २०७९/८० सम्म अस्तित्वमा रहेका ४४ संस्थानमध्ये २० वटा नेपाल सरकारको पूर्ण स्वामित्वमा र २४ वटा अधिकांश स्वामित्व (नेपाल सरकार र नेपाल सरकारको स्वामित्व रहेका अन्य निकायहरूको ५० प्रतिशतभन्दा बढी स्वामित्व) मा रहेका छन्। सामाजिक क्षेत्रमा रहेका ५ वटै संस्थानमा नेपाल सरकारको पूर्ण स्वामित्व रहेको छ। औद्योगिक क्षेत्रका दुग्ध विकास संस्थान, उदयपुर सिमेन्ट उद्योग लि., हेटौंडा सिमेन्ट उद्योग लि., जनकपुर चुरोट कारखाना लि. र धौबादी फलाम कारखानामा नेपाल सरकारको शतप्रतिशत शेयर लगानी रहेको छ। नेपाल औषधी लिमिटेडमा नेपाल सरकारको ९९.०७ प्रतिशत र अन्य निजी क्षेत्रको ०.९३ प्रतिशत शेयर रहेको अवस्था छ।

नेपाल ओरिण्ड म्याग्नेसाइट प्रा.लि.मा नेपाल सरकारको ८३.३३ प्रतिशत र अन्य सार्वजनिक तथा निजी क्षेत्रको १६.६७ प्रतिशत, बुटवल धागो कारखाना लि. मा नेपाल सरकारको ५९.७४ प्रतिशत र अन्य संस्थान तथा निजी क्षेत्रको ४०.२६ प्रतिशत, नेपाल मेटल कम्पनी लि. मा नेपाल सरकारको ७१.३१ प्रतिशत र अन्य संस्थान तथा निजी क्षेत्रको २८.६९ प्रतिशत शेयर लगानी रहेको छ।

व्यापारिक क्षेत्रका ४ वटा संस्थानमध्ये खाद्य तथा व्यापार कम्पनी लिमिटेडमा नेपाल सरकारको पूर्ण स्वामित्व रहेको छ भने कृषि सामग्री कम्पनी लिमिटेडमा नेपाल सरकारको ९७.७१ प्रतिशत स्वामित्व

रहेको छ। सेवा क्षेत्रका नेपाल पारवहन तथा गोदाम व्यवस्था कम्पनी लि., नेपाल वायु सेवा निगम, नेपाल नागरिक उड्डयन प्राधिकरण, नेशनल कन्स्ट्रक्सन कम्पनी नेपाल लि., नेपाल रेल्वे कम्पनी लि., नेपाल पूर्वाधार निर्माण कम्पनी लि. र नेपाल इञ्जिनियरिङ्ग कन्सल्टेन्सी सेवा केन्द्र लि. मा नेपाल सरकारको शत प्रतिशत स्वामित्व रहेको छ।

जनोपयोगी क्षेत्रतर्फ नेपाल खानेपानी संस्थान र नेपाल विद्युत प्राधिकरणमा सरकारको पूर्ण स्वामित्व रहेको छ। वित्तीय क्षेत्रतर्फका राष्ट्रिय बीमा संस्थान(हाल राष्ट्रिय जीवन बीमा कम्पनी लिमिटेड), राष्ट्रिय बीमा कम्पनी लि. र नागरिक लगानी कोषमा नेपाल सरकार र नेपाल सरकारको स्वामित्व रहेका अन्य सार्वजनिक निकायको अधिकांश शेयर स्वामित्व रहेको छ।

सार्वजनिक संस्थानमा आ.व.२०७८/७९ को तुलनामा चुक्ता पुँजी १०.६२ प्रतिशतले वृद्धि भई आर्थिक वर्ष २०७९/८० मा रू. ४ खर्ब १२ अर्ब १२ करोड ८१ लाख पुगेको छ। जसमा नेपाल सरकारको पुँजी लगानी ९२.१३ प्रतिशत र अन्य संस्थान तथा निजी क्षेत्रको ७.८७ प्रतिशत शेयर स्वामित्व रहेको छ। क्षेत्रगत रूपमा विश्लेषण गर्दा वित्तीय क्षेत्रका सार्वजनिक संस्थानमा नेपाल सरकारको ६६.३६ प्रतिशत शेयर रहेको छ भने अन्य संस्थान तथा निजी क्षेत्रको ३३.६४ प्रतिशत रहेको छ। औद्योगिक क्षेत्रमा सरकारको शेयर ९५.६७ प्रतिशत, व्यापारिक क्षेत्रमा ९९.३४ प्रतिशत, सेवा क्षेत्रमा ९९.४९ प्रतिशत, सामाजिक क्षेत्रमा शतप्रतिशत र जनोपयोगी क्षेत्रमा ९८.७३ प्रतिशत सरकारको स्वामित्व रहेको छ। सार्वजनिक संस्थानको शेयर स्वामित्व संरचना तालिका १.१ मा उल्लेख गरिएको छ।

तालिका १.१ सार्वजनिक संस्थानको शेयर स्वामित्व संरचना

(प्रतिशतमा)

| क्र.सं. | संस्थानको नाम | नेपाल सरकार | संस्थान/निजी क्षेत्रको | कैफियत |
|---|---|---|---|---|
| **क. औद्योगिक क्षेत्र** | | | | |
| १ | दुग्ध विकास संथान | १००.०० | ००.०० | |
| २ | जडिबुटी उत्पादन तथा प्रशोधन कम्पनी लि.[1] | ९७.६१ | २.३९ | |
| ३ | हेटौंडा सिमेन्ट उद्योग लि. | १००.०० | ०.०० | |
| ४ | जनकपुर चुरोट कारखाना लि. | १००.०० | ०.०० | |
| ५ | नेपाल औषधि लिमिटेड | ९९.०७ | ०.९३ | |
| ६ | उदयपुर सिमेन्ट उद्योग लि. | १००.०० | ०.०० | |
| ७ | नेपाल ओरिण्ड म्याग्नासाइट प्रा.लि. | ८३.३३ | १६.६७ | |
| ८ | बुटवल धागो कारखाना लि.[2] | ५९.७४ | ४०.२६ | |

[1] जडिबुटी उत्पादन तथा प्रशोधन कम्पनी लिमिटेड, कृषि सामग्री कम्पनी लिमिटेड, विद्युत् उत्पादन कम्पनी लिमिटेड र राष्ट्रिय प्रशारण ग्रिड कम्पनीको एडभान्स शेयरलाई कुल शेयरमा समावेश गरिएको हुँदा आ.व.२०७८/७९ को तुलनामा शेयर स्वामित्वमा परिवर्तन भएको।

[2] बुटवल धागो कारखानाको कम्पनी रजिष्ट्रारको कार्यालयबाट प्राप्त शेयर लगतका आधारमा स्वामित्व गणना गरिएको।

| | | | | |
|---|---|---|---|---|
| ९ | नेपाल मेटल कम्पनी लि. | ७१.३१ | २८.६९ | |
| १० | धौबादी फलाम कारखाना. | १००.०० | ०.०० | |
| | **जम्मा** | **९५.६७** | **४.३३** | |
| **ख. जनोपयोगी क्षेत्र** | | | | |
| १ | नेपाल खानेपानी संस्थान | १००.०० | ०.०० | |
| २ | नेपाल विद्युत प्राधिकरण | १००.०० | ०.०० | |
| ३ | नेपाल दूरसञ्चार कम्पनी लि. | ९१.५० | ८.५० | |
| ४ | विद्युत उत्पादन कम्पनी लि. | ७१.६९ | २८.३१ | |
| ५ | राष्ट्रिय प्रसारण ग्रीड कम्पनी | ९८.७६ | १.२४ | |
| | **जम्मा** | **९८.७३** | **१.२७** | |
| **ग. व्यापारिक क्षेत्र** | | | | |
| १ | कृषि सामग्री कम्पनी लि. | ९७.७१ | २.२९ | |
| २ | खाद्य व्यवस्था तथा व्यापार कम्पनी लि. | १००.०० | ०.०० | |
| ३ | नेपाल आयल निगम लि. | ९९.४६ | ०.५४ | |
| ४ | नेपाल वन निगम लि. | ९६.२७ | ३.७३ | |
| | **जम्मा** | **९९.३४** | **०.६६** | |
| **घ. वित्तीय क्षेत्र** | | | | |
| १ | कृषि विकास बैङ्क लि. | ६५.१० | ३४.९० | |
| २ | राष्ट्रिय बीमा संस्थान [3] | २७.७८ | ७२.२२ | |
| ३ | राष्ट्रिय बीमा कम्पनी लि. [4] | ४७.५० | ५२.५० | |
| ४ | राष्ट्रिय वाणिज्य बैङ्क लि. | ९९.९७ | ०.०३ | |
| ५ | निक्षेप तथा कर्जा सुरक्षण कोष | ९०.०० | १०.०० | |
| ६ | नेपाल स्टक एक्सचेन्ज लिमिटेड | ५८.६६ | ४१.३४ | |
| ७ | नागरिक लगानी कोष[5] | २३.३४ | ७६.६६ | |
| ८ | हाइड्रोइलेक्ट्रिसिटी इन्भेष्टमेन्ट एण्ड डेभलपमेन्ट कम्पनि लिमिटेड[6] | ५४.७७ | ४५.२३ | |
| ९ | नेपाल बैङ्क लि. | ५१.०० | ४९.०० | |
| | **जम्मा** | **६६.३६** | **३३.६४** | |
| **ङ. सामाजिक क्षेत्र** | | | | |
| १ | सांस्कृतिक संस्थान | १००.०० | - | |
| २ | गोरखापत्र संस्थान | १००.०० | - | |

[3] राष्ट्रिय बीमा संस्थान(हाल राष्ट्रिय जीवन बीमा कम्पनी लिमिटेड)मा नेपाल सरकारको २७.७८ प्रतिशत, नेपाल राष्ट्र बैङ्कको ४५.५५ प्रतिशत र नेपाल बैङ्क लिमिटेडको १६.६७ प्रतिशत शेयर रहेको ।

[4] राष्ट्रिय बीमा कम्पनी लिमिटेडमा नेपाल सरकारको ४७.५० प्रतिशत, कर्मचारी सञ्चयकोषको १९.३७ प्रतिशत, नेपाल बैङ्क लिमिटेडको ९.६० प्रतिशत र सर्वसाधारणको २३.५३ प्रतिशत शेयर रहेको।

[5] नागरिक लगानी कोषमा नेपाल सरकारको २३.३४ प्रतिशत, राष्ट्रिय बीमा संस्थानको ३१.५५ प्रतिशत, नेपाल स्टक एक्स्चेञ्जको १० प्रतिशत अन्य बैङ्क तथा वित्तीय संस्थाको १५.११ प्रतिशत र सर्वसाधारणको २० प्रतिशत शेयर रहेको।

[6] हकप्रद शेयरको लिलाम बिक्रीको प्रक्रियामा रहेको हुँदा स्वामित्व परिवर्तन देखिएको।

| | | | | |
|---|---|---|---|---|
| ३ | जनक शिक्षा सामग्री केन्द्र लि. | १००.०० | - | |
| ४ | नेपाल टेलिभिजन | १००.०० | - | |
| ५ | राष्ट्रिय आवास कम्पनी लि. | १००.०० | - | |
| | **जम्मा** | **१००.००** | **-** | |
| **च. सेवा क्षेत्र** | | | | |
| १ | औद्योगिक क्षेत्र व्यवस्थापन लि. | ९९.६९ | ०.३१ | |
| २ | नेपाल पारवहन तथा गोदाम व्यवस्था कं. लि. | १०० | | |
| ३ | नेशनल कन्स्ट्रक्सन कम्पनी नेपाल लि. | १०० | - | |
| ४ | नेपाल वायुसेवा निगम | १०० | - | |
| ५ | नेपाल इञ्जिनीयरिङ्ग कन्सल्टेन्सी सेवा केन्द्र लि. | १०० | - | |
| ६ | नेपाल नागरिक उड्डयन प्राधिकरण | १०० | - | |
| ७ | राष्ट्रिय उत्पादकत्व तथा आर्थिक विकास केन्द्र लि.[7] | २३.९५ | ७६.०५ | |
| ८ | नेपाल पूर्वाधार निर्माण कम्पनी लि. | १०० | - | |
| ९ | साझा यातायात [8] | ९२.१८ | ७.८२ | |
| १० | नेपाल रेल्वे कम्पनी लि. | १०० | - | |
| ११. | विशाल बजार कम्पनी लिमिटेड | ९८.७५ | १.२५ | |
| | **जम्मा** | **९९.४९** | **०.५१** | |
| | **कुल जम्मा** | **९२.१३** | **७.८७** | |

**स्रोतः सम्बन्धित संस्थानबाट प्राप्त विवरण।**

## १.५ नेपालको अर्थतन्त्रमा सार्वजनिक संस्थानको भूमिका

सार्वजनिक संस्थानले नेपालको आर्थिक तथा सामाजिक विकास, पूर्वाधार निर्माण, दुर्गम क्षेत्रमा वस्तु तथा सेवा प्रवाह गर्ने जस्ता कार्यमा महत्त्वपूर्ण भूमिका खेल्दै आएका छन्। सार्वजनिक संस्थानको भूमिकालाई संक्षेपमा देहाय बमोजिम उल्लेख गर्न सकिन्छः

(क) जनताको आधारभूत आवश्यकता पूरा गर्ने कार्यमा सहयोग तथा बजारमा हुन सक्ने कृत्रिम अभाव, कार्टेलिङ, सिण्डिकेट र कालोबजारीलाई नियन्त्रण गरी सर्वसाधारण जनताको हित कायम गर्नमा योगदान गरेको पाइन्छ।

(ख) बैंक तथा वित्तीय क्षेत्रको विकास एवं स्रोत परिचालन, पूँजी निर्माण, वित्तीय सेवाको विस्तार र मूल्य स्थिरता कायम गर्न योगदान गरेको पाइन्छ।

[7] राष्ट्रिय उत्पादकत्व तथा आर्थिक विकास केन्द्र लिमिटेडमा नेपाल सरकारको २३.९५ प्रतिशत, नेपाल राष्ट्र बैङ्कको ३१.५२ प्रतिशत, राष्ट्रीय वाणिज्य बैङ्कको ( तत्कालिन नेपाल औद्योगिक विकास निगमको स्वामित्वको शेयर) को १२.६० प्रतिशत, नेपाल बैङ्क लिमिटेडको ६.३० प्रतिशत हेटौंडा सिमेन्ट उद्योग लिमिटेडको ६.३० प्रतिशत, नेपाल आयल निगमको ३.७९ प्रतिशत, राष्ट्रिय वाणिज्य बैंकको ३.१५ प्रतिशत, वीरगंज चिनी कारखाना लिमिटेडको ३.१५ प्रतिशत, राष्ट्रिय बीमा संस्थानको २.५२ प्रतिशत र अन्य निकाय तथा कर्मचारीको ६.७२ प्रतिशत शेयर रहेको।

[8] साझा यातायात सहकारी संस्थाको चुक्ता पूँजी वृद्धिका कारण शेयर स्वामित्वमा परिवर्तन भएको।

(ग) औद्योगिकीकरण र उद्यमशिलताको विकास गरी रोजगारी सिर्जना र गार्हस्थ्य उत्पादन वृद्धिमा योगदान पुर्‍याउँदै आएका छन्।

(घ) आन्तरिक उत्पादनमा वृद्धि गरी आयात प्रतिस्थापन र निर्यात प्रवर्द्धनमा सहयोग गर्दै नेपालको अर्थतन्त्रलाई विश्व अर्थतन्त्रसँग आवद्ध गराउने कार्यमा योगदान पुर्‍याउँदै आएका छन्।

(ङ) नेपालको परम्परागत कला, संस्कृतिको संरक्षण र सम्वर्द्धन गरी साँस्कृतिक पहिचान र सामाजिक मूल्य-मान्यताको संरक्षण गर्नुको साथै सामाजिक तथा आर्थिक विकासमा योगदान पुर्‍याएका छन्।

(च) सूचना तथा सञ्चार प्रणालीको विकास र विस्तार मार्फत जनताको सुसूचित हुन पाउने हकको संरक्षण र प्रवर्द्धनमा सहयोग पुर्‍याएका छन्।

(छ) समय समयमा नेपालले सामना गर्नु परेका बाढी, पहिरो, भूकम्प, महामारी लगायतको सङ्कटको समयमा वस्तु तथा सेवाको आपूर्ति मार्फत राष्ट्रिय हित वा सर्वसाधारण जनताको स्वास्थ्य, सुविधा वा आर्थिक हित कायम गर्नको लागि योगदान पुर्‍याएका छन्।

(ज) नेपाल सरकारको कर तथा गैहकर राजस्व संकलनमा समेत सार्वजनिक संस्थानले महत्त्वपूर्ण योगदान पुर्‍याएका छन्।

## १.६ सार्वजनिक संस्थानको समग्र कार्यसम्पादन स्थिति

विश्व अर्थतन्त्रमा भएको परिवर्तन, युद्ध, महामारी जस्ता बाह्य कारण र वस्तु तथा सेवाको मूल्य, गुणस्तर, माग, प्रतिस्पर्धाको अवस्था जस्ता आन्तरिक कारणबाट राष्ट्रिय अर्थतन्त्रमा पर्ने प्रभावबाट सार्वजनिक संस्थानको आर्थिक वर्ष २०७९/८० को समग्र कार्यसम्पादनमा समेत प्रत्यक्ष तथा परोक्ष असर पर्न गएको छ। आर्थिक वर्ष २०७८/७९ मा संस्थानको कुल सञ्चालन आय रू. ५ खर्ब ७५ अर्ब ४३ करोड ५५ लाख रहेकोमा आर्थिक वर्ष २०७९/८० मा १४.८७ प्रतिशतले वृद्धि भई रू. ६ खर्ब ६१ अर्ब ०१ करोड २९ लाख पुगेको छ। आर्थिक वर्ष २०७८/७९ को तुलनामा सार्वजनिक संस्थानको समग्र खुद नाफामा ३०४६.२० प्रतिशतले वृद्धि भई आर्थिक वर्ष २०७९/८० मा रू.४८ अर्ब ५१ करोड ७५ लाख कायम भएको छ। यसरी नाफा उच्च वृद्धि हुनुमा नेपाल आयल निगममा आ.व.२०७८/७९ मा ३८ अर्ब १७ करोड ७८ लाख घाटा रहेकोमा आ.व.२०७९/८० मा ११ अर्ब ७२ करोड ३० लाख नाफामा रहनु मुख्य कारण हो। आर्थिक वर्ष २०७९/८० सम्मको कूल सञ्चित नाफामा अघिल्लो आर्थिक वर्षको तुलनामा १६.६८ प्रतिशतले वृद्धि भई रू.६१ अर्ब १४ करोड ९६ लाख पुगेको छ। आर्थिक वर्ष २०७९/८० मा अस्तित्वमा रहेका संस्थान मध्ये २६ वटा संस्थानले नाफा आर्जन गरेका छन् भने १५ वटा संस्थान घाटामा रहेका छन्। तीनवटा संस्थानको कारोबार शून्य रहेको छ। विगत वर्षहरूबाटै जनकपुर चुरोट कारखाना लिमिटेड बन्द छ भने विद्युत उत्पादन कम्पनी लिमिटेड र राष्ट्रिय प्रसारण ग्रीड कम्पनीको

व्यवसाय शुरूवाती अवस्थामा रहेको छ। घाटामा रहेका संस्थानमध्ये नेपाल ओरिण्ड म्याग्नासाईट प्रा. लि. र बुटवल धागो कारखाना लिमिटेड ले व्यावसायिक कारोबार गरेका छैनन् भने नेपाल रेल्वे कम्पनी लि. ले उद्देश्य अनुरूप व्यवसाय विस्तार गर्न सकेको छैन। व्यावसायिक कारोबार नभएपनि यी तीन कम्पनीको नियमित प्रशासनिक खर्च भइरहेकोले नोक्सानीमा छन्। आर्थिक वर्ष २०७९/८० मा नाफामा सञ्चालित २६ संस्थानको गत वर्षको तुलनामा खुद नाफा ९८१.४० प्रतिशतले बढेको छ भने नोक्सानीमा सञ्चालित १५ संस्थानको गत वर्षको तुलनामा खुद नोक्सानी २.८१ प्रतिशतले बढेको देखिन्छ। सार्वजनिक संस्थानको प्रशासनिक खर्च २३.७९ प्रतिशतले बढेको छ।

आर्थिक वर्ष २०७९/८० मा शेयरधनीकोष (नेटवर्थ) गत आर्थिक वर्षको तुलनामा २९ प्रतिशतले वृद्धि भई रू.९ खर्ब ८२ अर्ब १३ करोड १७ लाख पुगेको छ। संस्थानबाट उपलब्ध भएको विवरण अनुसार नेपाल सरकारको कुल लगानी गत आर्थिक वर्षको तुलनामा ८.६२ प्रतिशतले वृद्धि भई रू.६ खर्ब ६१ अर्ब १० करोड ७४ लाख पुगेको छ। गत आर्थिक वर्षको तुलनामा शेयर लगानी ९.१९ प्रतिशतले वृद्धि भई रू.३ खर्ब ७९ अर्ब ७२ करोड १६ लाख पुगेको छ भने ऋण लगानीमा ७.८६ प्रतिशतले कमी आई रू.२ खर्ब ८१ अर्ब ३८ करोड ५८ लाख पुगेको छ।

आर्थिक वर्ष २०७९/८० मा कोषमा व्यवस्था नभएको दायित्व गत आर्थिक वर्षको तुलनामा ११.६३ प्रतिशतले वृद्धि भएको छ भने सम्भावित दायित्व ४४.८३ प्रतिशतले बढेको छ। नेपाल स्टक एक्सचेन्ज लि. मा सूचीकृत ७ वटा सार्वजनिक संस्थानको कूल बजार पुँजीकरण अघिल्लो आर्थिक वर्षको तुलनामा १.८१ प्रतिशतले वृद्धि भएको छ। २४ संस्थानले आर्थिक वर्ष २०७९/८० मा नियमित रूपमा लेखापरीक्षण नगराएकोले वित्तीय अवस्थाको यथार्थ मुल्याङ्कन हुन नसक्नुका साथै वित्तीय अनुशासनको पक्ष पनि कमजोर रहेको छ। हाल अस्तित्वमा रहेका सार्वजनिक संस्थानको आर्थिक वर्ष २०७८/७९ र २०७९/८० को प्रमुख वित्तीय सूचक तालिका १.२ र सञ्चालन तथा वित्तीय स्थितिका सूचक तालिका १.३ मा प्रस्तुत गरिएको छ।

तालिका १.२ सार्वजनिक संस्थानको प्रमुख वित्तीय सूचक

रकम (रू. लाखमा)

| क्र.सं. | विवरण | आर्थिक वर्ष २०७८/७९ | आर्थिक वर्ष २०७९/८० | परिवर्तन (प्रतिशत) |
|---|---|---|---|---|
| | <u>आर्थिक वर्षको अन्त्यमा वित्तिय स्थिति</u> | | | |
| १ | चुक्ता पुँजी | ३७२५५४१ | ४१२१२८१.३९ | १०.६२% |
| २ | सञ्चित नाफा/नोक्सानी | ५२४०७८ | ६११४९६.४० | १६.६८% |
| ३ | शेयरधनीकोष/ नेटवर्थ | ७६१३३२६ | ९८२१३१७.४९ | २९.००% |
| ४ | वित्तीय लगानी | ४२१०७५२ | ४९२७३९२.१२ | १७.०२% |
| ५ | खुद पुँजी लगानी (क्यापीटल इम्प्लोइड) | १२०९२१५३ | १७८१६६१०.११ | ४७.३४% |
| ६ | ऋण (डेब्ट) | ३४३१२६१ | ३३७६५७०.४७ | -१.५९% |
| | <u>आर्थिक वर्षमा वित्तीय कार्य अवस्था</u> | | | |

| | | | | |
|---|---|---|---|---|
| ७ | कुल आय | ६३३०५०९ | ७४४१७४७.०२ | १७.५५% |
| ८ | कुल खर्च (आयकर व्यवस्था अघिको) | ६२८६७९० | ६७४८१६५.५६ | ७.३४% |
| ९ | कर व्यवस्था (चालु तथा डिफर्ड) | २८२९९ | २०८४०६.७१ | ६३६.४५% |
| १० | खुद नाफा/नोक्सान | १५४२१ | ४८५१७४.७५ | ३०४६.२०% |
| ११ | खुद नाफा/खुद पुँजी लगानी अनुपात | ०.१३% | २.७२% | २०३५.३३% |
| १२ | डेब्ट इक्वीटी अनुपात | ४५.०७% | ३४.३८% | -२३.७२% |
| १३ | प्रतिकर्मचारी तलब सुविधा (एक आय वर्षमा) | ८.९० | ९.८८ | ११.०१ |
| | **आर्थिक वर्ष २०७९/८० मा संस्थानबाट विभिन्न शीर्षकहरूमा नगदमा प्राप्त रकम** | | | |
| १४ | **सरकारको लगानीमा (क)** | ११४८०६ | १७५४२८.९० | ५२.८% |
| | **ब्याज** | **५३२५५** | **७५३८३.०४** | **४१.५५%** |
| | लाभांश | ६१५५१ | १०००४५.८६ | ६२.५४% |
| १५ | **कर तथा शुल्क वापत (ख)** | **१६७४३८२** | **१४७९३६८.६८** | **-११.६५%** |
| | रोयल्टी | ३८९४० | ३८२८४.३६ | -१.६८% |
| | अन्तः शुल्क | ४८७७७१ | ३७१७६७.४७ | -२३.७८% |
| | मूल्य अभिवृद्धि कर (VAT) | ५३८२१३ | ४९४६९०.०५ | -८.०९% |
| | आयकर | १४३८१८ | १७३९४६.५८ | २१.९५% |
| | अन्य | ४६५६३९ | ४००६८०.२३ | -१३.९५% |
| | **जम्मा (क+ख)** | **१७८९१८८** | **१६५४७९७.५८** | **-७.५१%** |

तालिका १.३ सार्वजनिक संस्थानको सञ्चालन तथा वित्तीय स्थितिका सूचक

| | | | | **रकम (रू.लाखमा)** |
|---|---|---|---|---|
| **सि.नं.** | **विवरण** | **आ.व.२०७८/७९** | **आ.व.२०७९/८०** | **परिवर्तन प्रतिशत** |
| १ | जगेडा कोष | ३३०५९२८ | ५०७७९६७ | ५३.६०% |
| २ | **सरकारको कुल लगानी**[9] | ६१८१६४६ | ६६११०७४ | ६.९५% |
| | (क) शेयर लगानी | ३२८९२७५ | ३७९७२१६ | १५.४४% |
| | (ख) ऋण लगानी | २८९२३७१ | २८१३८५८ | -२.७१% |
| ३ | कुल सञ्चालन आय | ५७५४३५५ | ६६१०१२९ | १४.८७% |
| ४ | कुल सञ्चालन खर्च | ४९८६६५५ | ६७४८१६६ | ३५.३२% |
| ५ | प्रशासनिक खर्च (कर्मचारी खर्चसहित) | ३५४६४७ | ४३९०१८ | २३.७९ |
| ६ | **समग्र खुद नाफा/नोक्सानी** | १५४२१ | ४८५१७५ | ३०४६.२० |
| | (क) नाफामा सञ्चालित संस्थानको खुद नाफा | ४३०२५३ | ५१८५८४ | २०.५३ |
| | (ख) नोक्सानीमा सञ्चालित संस्थानको खुद नोक्सानी | (४१४८३२) | (३३४१०) | -९१.९५% |
| ७ | **सञ्चित नाफा/नोक्सानी** | ५२४०७८ | ६११४९६ | १६.६८% |
| | (क) सञ्चित नाफा | ११२७२७१ | १११७६८८ | -०.८५% |
| | (ख) सञ्चित नोक्सानी | (६०३१९२) | (५०६१९१) | -१६.०८% |
| ८ | कोषमा व्यवस्था नभएको दायित्व [10] | ४७३६०० | ५२८७०२ | ११.६३% |

[9] सम्बन्धित सार्वजनिक संस्थानबाट प्राप्त विवरण बमोजिम।

| | | | | |
|---|---|---|---|---|
| ९ | सम्भावित दायित्व [11] | १२४२९१२५ | १८००१२५९ | ४४.८३% |
| १० | बजार पुँजीकरण (७ संस्थाहरू) | ५५४६३३३ | ५६४६७४५ | १.८१% |
| ११ | लेखा परीक्षण सम्पन्न गर्ने संस्थानको संख्या | २१ | २० | -४.७६% |
| १२ | नाफामा सञ्चालन भएका संस्थान | २५ | २६ | ४.००% |
| १३ | नोक्सानी भएका संस्थानको संख्या | १७ | १५ | -११.७६% |
| १४ | बन्द भएका एवं कारोबार नभएको संस्थानको संख्या | २ | ३ | ५०.००% |
| १५ | सञ्चित नाफा भएका संस्थानको संख्या | २० | २२ | १०.००% |
| १६ | सञ्चित नोक्सानी भएका संस्थानको संख्या | १९ | १७ | -१०.५३% |
| १७. | सञ्चित नाफा/ नोक्सानी भएका संस्थानको संख्या | ५ | ५ | ०.००% |
| १८ | कर्मचारी संख्या | २९७३६ | ३२१८० | ८.२२% |
| १९ | सञ्चालन अनुदान | ८१३१३ | २०६२५९ | १५३.६६% |
| २० | **अभिलेख भिडान हुन बाँकी रकम** | | | |
| | (क) शेयर लगानी | (१८८३३८) | (२७३७५७) | ४५.३५% |
| | (ख) ऋण लगानी | २८३७६८ | २७१५०६ | -४.३२% |
| २१ | अस्तित्वमा रहेका सार्वजनिक संस्थान संख्या [12] | ४४ | ४४ | - |
| २२ | सञ्चालनमा रहेका सार्वजनिक संस्थान संख्या | ४२ | ४२ | - |
| २३. | वित्तीय विवरण तयार गर्न प्रयोग भएको सार्वजनिक संस्थान संख्या | ४२ | ४२ | - |

**स्रोतः सम्बन्धित संस्थानबाट प्राप्त विवरण।**

## १.७ कुल गार्हस्थ्य उत्पादनमा सञ्चालन आयको अनुपात

आर्थिक वर्ष २०७९/८० को कुल गार्हस्थ्य उत्पादन रू. ५३ खर्ब ८१ अर्ब ३४ करोडमा सार्वजनिक संस्थानको कुल सञ्चालन आयको अनुपात १२.२८ प्रतिशत रहेको छ। यो अनुपात गत आर्थिक वर्षको तुलनामा ०.६१ प्रतिशत बढी हो। विगत पाँच वर्षको यस्तो अनुपात विश्लेषण गर्दा आर्थिक वर्ष २०७७/७८ मा यो अनुपात सबभन्दा कम ९.७१ प्रतिशत रहेको छ।

आर्थिक वर्ष २०७५/७६ देखि कुल गार्हस्थ्य उत्पादनमा सार्वजनिक संस्थानको कुल सञ्चालन आयको अनुपात निरन्तर बढ्दै गएकोमा आर्थिक वर्ष २०७६/७७ मा अघिल्लो आर्थिक वर्षको तुलनामा घटेको थियो भने आर्थिक वर्ष २०७७/७८ पछि निरन्तर बढेको छ। आ.व.२०७९/८० मा कुल गार्हस्थ्य उत्पादनमा सञ्चालन आयको अनुपात व्यापारिक क्षेत्रका सार्वजनिक संस्थानको सबैभन्दा बढी ७.२४ प्रतिशत र सामाजिक क्षेत्रका सार्वजनिक संस्थानको अनुपात सबैभन्दा कम

---

[10] वासलात बाहिरका विषयहरू (off balance sheet items)

[11] वासलात बाहिरका विषयहरु (off balance sheet items), निक्षेप तथा कर्जा सुरक्षण कोषको आ.व.२०७८/७९ को तथ्याङ्क सच्याईएको।

[12] अस्तित्वमा रहेका सार्वजनिक संस्थानको संख्यामा नेशनल कन्स्ट्रक्सन कम्पनी नेपाल लि. तथा नेपाल ईन्जिनियरिङ्ग कन्सल्टेन्सी सेवा केन्द्र लि. लाई समावेश गरिएको छ।

०.०७ प्रतिशत रहेको छ। कूल गार्हस्थ्य उत्पादनमा सञ्चालन आयको अनुपात तालिका १.४ मा उल्लेख गरिएको छ।

तालिका १.४ कुल गार्हस्थ्य उत्पादनमा सञ्चालन आयको अनुपात

(प्रतिशतमा)

| सार्वजनिक संस्थानको क्षेत्र | आर्थिक वर्ष | | | | |
|---|---|---|---|---|---|
| | २०७५/७६ | २०७६/७७ | २०७७/७८ | २०७८/७९ | २०७९/८० |
| औद्योगिक | ०.२१ | ०.१५ | ०.१५ | ०.१३ | ०.०९ |
| व्यापारिक | ७.५३ | ५.६२ | ५.५३ | ७.०६ | ७.२४ |
| सेवा | ०.७५ | ०.५८ | ०.३३ | ०.५१ | ०.७० |
| सामाजिक | ०.०६ | ०.०६ | ०.०६ | ०.०६ | ०.०७ |
| जनोपयोगी | ३.०१ | २.६५ | २.४७ | २.५५ | २.५५ |
| वित्तीय | २.०७ | १.८९ | १.१६ | १.३५ | १.६२ |
| कुल गार्हस्थ्य उत्पादनमा कुल सञ्चालन आयको अनुपात | १३.६३ | १०.९५ | ९.७१ | ११.६७ | १२.२८ |

स्रोतः केन्द्रीय तथ्याङ्क विभाग र सम्बन्धित संस्थान।

चित्र १ कुल गार्हस्थ्य उत्पादनमा कुल सञ्चालन आयको अनुपात




स्रोतः तालिका १.४ अनुसार।

## १.८ आयकरमा योगदान

सार्वजनिक संस्थान सरकारी राजस्वको महत्वपूर्ण स्रोतको रूपमा रहेको छ। नेपाल सरकारले प्राप्त गरेको कुल आयकरमा आर्थिक वर्ष २०७८/७९ मा सार्वजनिक संस्थानको योगदान ५.५९ प्रतिशत

रहेकोमा आर्थिक वर्ष २०७९/८० मा ६.९७ प्रतिशत पुगेको छ। आर्थिक वर्ष २०७९/८० मा नेपाल सरकारको सञ्चितकोषमा सार्वजनिक संस्थानले कुल रू.१७ अर्ब ३९ करोड ४६ लाख आयकर दाखिला गरेका छन्। यो आर्थिक वर्ष २०७८/७९ को तुलनामा २०.९४ प्रतिशतले बढि हो।

क्षेत्रगत रूपमा विश्लेषण गर्दा वित्तीय क्षेत्रको सबैभन्दा बढी रू.८ अर्ब ५७ करोड २९ लाख (४९.२८ प्रतिशत) र सबैभन्दा कम व्यापारिक क्षेत्रको रू. १ करोड १६ लाख (०.०६ प्रतिशत) योगदान छ। आयकरमा सबैभन्दा बढी योगदान गर्ने तीन संस्थानमा क्रमशः नेपाल दुरसञ्चार कम्पनी लिमिटेड (२६.५८ प्रतिशत), नेपाल बैंक लिमिटेड (१३.७१ प्रतिशत) र नेपाल विद्यूत् प्राधिकरण(१३.१७) प्रतिशत रहेका छन्। सार्वजनिक संस्थानमा प्राप्त आयकरमा उल्लेखित तीनवटा संस्थानको योगदान ५३.४५ प्रतिशत रहेको छ। आ.व.२०७९/८० मा २४ वटा संस्थानको आयकरमा योगदान शुन्य रहेको छ। सार्वजनिक संस्थानको आयकरमा योगदान तालिका १.५ मा उल्लेख गरिएको छ।

तालिका १.५ आयकरमा योगदान

रकम (रू.लाखमा)

| क्षेत्रगत आयकर | आर्थिक वर्ष | | |
|---|---|---|---|
| | २०७७/७८ | २०७८/७९ | २०७९/८० |
| औद्योगिक | २१६ | ५८ | १९८.३१ |
| व्यापारिक | १२९०८ | १०८४ | ११६.६५ |
| सेवा | २०६१७ | ८८३७ | १८६४६.७९ |
| सामाजिक | ५४२ | १६३ | ११८.५० |
| जनोपयोगी | ४९०२८ | ६७४२६ | ६९१३७.२४ |
| वित्तीय | ६४८९७ | ६६२४८ | ८५७२९.०८ |
| जम्मा | १४८२०९ | १४३८१८ | १७३९४६.५८ |
| कुल आयकर | २२५९४४८ | २५७०७०८ | २४९५६५०.६० |
| कुल आयकरमा संस्थानको योगदान (प्रतिशत) | ६.५६ | ५.५९ | ६.९७% |

स्रोतः अर्थ मन्त्रालय र सम्बन्धित संस्थान।

चित्र २ कुल आयकरमा सार्वजनिक संस्थानको योगदान (प्रतिशत)




स्रोतःतालिका १.५ अनुसार।

## १.९ रोजगारीमा योगदान

आर्थिक वर्ष २०७९/८० मा सार्वजनिक संस्थानमा ३२,१८० जनाले प्रत्यक्ष रोजगारी प्राप्त गरेका छन्। जनोपयोगी क्षेत्रका संस्थानमा सबैभन्दा बढी १३,३७७ जना (४१.५६ प्रतिशत) र सामाजिक क्षेत्रका संस्थानमा सबैभन्दा कम १,४०८ जना (४.८७ प्रतिशत) कार्यरत छन्। औद्योगिक क्षेत्रका संस्थानमा कर्मचारीको संख्या आर्थिक वर्ष २०७८/७९ मा २,१५० जना रहेकोमा आर्थिक वर्ष २०७९/८० मा ७.५८ प्रतिशतले कमी भई १,९८७ जना रहेका छन्। सार्वजनिक संस्थानले प्रदान गरेको रोजगारी अघिल्लो आर्थिक वर्ष २०७८/७९ को तुलनामा ८.२१ प्रतिशतले वृद्धि भएको छ। सार्वजनिक संस्थानको रोजगारीमा योगदानको स्थिति तालिका १.६ मा उल्लेख गरिएको छ।

तालिका १.६ रोजगारीमा योगदानको स्थिति

(संख्यामा)

| क्षेत्रगत रूपमा कर्मचारी संख्या | आर्थिक वर्ष | | | | |
|---|---|---|---|---|---|
| | २०७५/७६ | २०७६/७७ | २०७७/७८ | २०७८/७९ | २०७९/८० |
| औद्योगिक | २१५६ | १९५९ | १९४३ | २१५० | १९८७ |
| व्यापारिक | १४४२ | १२७९ | १२४० | १३१८ | १४८६ |
| सेवा | २९६८ | २७९५ | २९६० | ३३३६ | ४५०२ |
| सामाजिक | १२५९ | १४३८ | १२८८ | १५८२ | १४०८ |
| जनोपयोगी | १३९८० | १३४०४ | १३०१० | १३१३० | १३३७७ |

| | | | | | |
|---|---|---|---|---|---|
| वित्तीय | ६९३३ | ७४८९ | ७५६१ | ८२२० | ९४२० |
| जम्मा | २८७३८ | २८३६४ | २८००२ | २९७३६ | ३२१८० |

स्रोतः सम्बन्धित संस्थानबाट प्राप्त विवरण।

चित्र ३   संस्थानमा रोजगारीको क्षेत्रगत विवरण (सङ्ख्यामा)




स्रोतः तालिका १.६ अनुसार।

आ.व.२०७९/८० मा सबैभन्दा बढी रोजगारी उपलब्ध गराउने तीन संस्थान क्रमशः नेपाल विद्युत् प्राधिकरण (८,७७५जना), नेपाल दुरसञ्चार कम्पनी लिमिटेड (३,९३० जना) र नेपाल बैंक लिमिटेड (३,५९९ जना) रहेका छन्। सार्वजनिक संस्थानमा यी तीन संस्थानको रोजगारीमा योगदानको हिस्सा ५०.६६ प्रतिशत रहेको छ। साथै सार्वजनिक संस्थानले उत्पादन तथा बिक्री वितरण गर्ने वस्तु तथा सेवाका कारण अप्रत्यक्ष रूपमा ठूलो संख्यामा रोजगारी तथा स्वरोजगारी सिर्जना भएको छ।

## १.१०   एकीकृत वासलातको स्थिति

आर्थिक वर्ष २०७९/८० मा संस्थानको कुल चुक्ता पुँजी गत आर्थिक वर्षको तुलनामा १०.६२ प्रतिशतले वृद्धि भई रू.४ खर्ब १२ अर्ब १२ करोड ८१ लाख पुगेको छ। यस अवधिमा संस्थानको सञ्चित नाफामा १६.६८ प्रतिशतले वृद्धि भई रू.६१ अर्ब १४ करोड ९६ लाख पुगेको छ। मध्यम तथा दीर्घकालीन ऋण गत आर्थिक वर्षको तुलनामा २३.१५ प्रतिशतले वृद्धि भएको छ भने अल्पकालीन दायित्व (ऋण तथा निक्षेप) मा १५.८४ प्रतिशतले वृद्धि भई रू.७ खर्ब ७४ अर्ब १ करोड ५ लाख पुगेको छ। चालु र अन्य दायित्व तथा व्यवस्था ४.७३ प्रतिशतले कमी आएको छ। खुद स्थिर सम्पत्ति ४१.८० प्रतिशतले वृद्धि भई रू.११ खर्ब ३४ अर्ब १८ करोड २४ लाख पुगेको छ भने चालु सम्पत्ति ०.६९ प्रतिशतले कम भई रू.२ खर्ब ७३ अर्ब ०७ करोड २१ लाख भएको छ। कुल लगानी १७.०२ प्रतिशत र कर्जा लगानी ५.३७ प्रतिशतले वृद्धि भएको छ भने नगद तथा बैङ्क मौज्दात २२.५८ प्रतिशतले वृद्धि भएको छ। आर्थिक वर्ष २०७९/८० मा संस्थानको कुल

सम्पत्ति १९.५० प्रतिशतले वृद्धि भई रू.२८ खर्ब ३७ अर्ब ११ करोड ५१ लाख पुगेको छ। आर्थिक वर्ष २०७९/८० मा समग्र संस्थानको चुक्ता पुँजी, सम्पत्ति तथा लगानी र नगद तथा बैंक मौज्दातमा वृद्धि भएको छ भने चालु र अन्य दायित्व तथा व्यवस्थामा कमी आएको छ। यसरी सार्वजनिक संस्थानको समग्र आर्थिक सूचकहरू मिश्रीत रहेको देखिन्छ। आर्थिक वर्ष २०७९/८० मा चुक्ता पूँजी अधिक रहेका ३ संस्थान नेपाल विद्यूत प्राधिकरण, नेपाल नागरिक उड्डयन प्राधिकरण र हाइड्रोइलेक्ट्रिसीटी इन्भेष्टमेन्ट एण्ड डेभलपमेन्ट कम्पनी लिमिटेडको हिस्सा कूल चुक्ता पुँजीको ६८.४३ प्रतिशत रहेको छ। सार्वजनिक संस्थानको एकीकृत वासलात तालिका १.७ मा उल्लेख गरिएको छ।

तालिका १.७ सार्वजनिक संस्थानको एकीकृत वासलात

रकम (रू.लाखमा)

| विवरण | (आ.व. २०७८/७९) | (आ.व. २०७९/८०) | परिवर्तन (प्रतिशत) |
|---|---|---|---|
| चुक्ता पुँजी | ३७२५५४१ | ४१२१२८१ | १०.६२% |
| शेयर प्रिमियम | १४१११ | - | -१००.००% |
| शेयर लगानी वापत प्राप्त अग्रिम भुक्तानी | ४३६६८ | १०५७३ | -७५.७९% |
| जगेडा कोष | ३३०५९२८ | ५०७७९६७ | ५३.०६% |
| सञ्चित नाफा/(नोक्सान) | ५२४०७८ | ६११४९६ | १६.६८% |
| मध्यम तथा दीर्घकालीन ऋण | ६४९२६३४ | ७९९५५८८ | २३.१५% |
| अल्पकालीन दायित्व (ऋण तथा निक्षेप) | ६६८१८८० | ७७४०१०५ | १५.८४% |
| चालु र अन्य दायित्व तथा व्यवस्था | २९५३९०१ | २८१४१४१ | -४.७३% |
| **कुल जम्मा** | **२३७४१७४०** | **२८३७११५१** | **१९.५०%** |
| खुद स्थिर सम्पत्ति | ७९९८४१३ | ११३४१८२४ | ४१.८०% |
| लगानी | ४२१०७५३ | ४९२७३९२ | १७.०२% |
| कर्जा लगानी | ७१६४६९२ | ७५४९७६५ | ५.३७% |
| नगद तथा बैङ्क मौज्दात | ११५९२४३ | १४२१०२५ | २२.५८% |
| चालु सम्पत्ति | २७४९५७४ | २७३०७२१ | -०.६९% |
| अन्य सम्पत्ति | ४५९०६४ | ४००४२४ | **-१२.७७%** |
| **कुल जम्मा** | **२३७४१७४०** | **२८३७११५१** | **१९.५०%** |

**स्रोतः सम्बन्धित संस्थानबाट प्राप्त विवरण।**

## १.११ नाफा/नोक्सानको एकीकृत विवरण

आर्थिक वर्ष २०७९/८० मा संस्थानको कुल आय गत वर्षको तुलनामा १७.५५ प्रतिशतले वृद्धि भई रू.७ खर्व ४४ अर्ब १७ करोड ४७ लाख रहेको छ। प्रत्यक्ष व्यापारिक खर्च गत वर्षको तुलनामा १.४३ प्रतिशतले वृद्धि भएको छ भने प्रशासनिक खर्चमा २३.७९ प्रतिशतले वृद्धि भएको देखिन्छ। खुद नाफा सबैभन्दा बढी भएका तीनवटा संस्थानमा क्रमशः नेपाल आयल निगम लिमिटेड, नेपाल विद्युत प्राधिकरण र नेपाल दुरसञ्चार कम्पनी लि. छन्। विगत ५ वर्षको खुद नाफाको तथ्याङ्क हेर्दा

नेपाल आयल निगम आ.व.२०७७/७८ मा घाटामा गएको बाहेक सबै वर्ष तीनै संस्थान उच्च नाफामा रहेका छन्। सार्वजनिक संस्थानको एकीकृत नाफा/नोक्सान हिसाबको विवरण तालिका १.८ मा प्रस्तुत गरिएको छ।

तालिका १.८ नाफा/नोक्सानको एकीकृत विवरण

| विवरण | (आ.व. २०७८/७९) | (आ.व. २०७९/८०) | परिवर्तन (प्रतिशत) |
|---|---|---|---|
| ग्राहक सँगको सम्झौतामा आधारित आय/ बिक्री आय/ ब्याज आय | ५७५४३५४ | ६,६१०,१२९ | १४.८७% |
| लगानीबाट प्राप्त आय | ३३१७२६ | ४८४,९६४ | ४६.१९% |
| अन्य आय | २४४४२७ | ३४६,६५५ | ४१.८२% |
| **कुल आय** | **६३३०५०८** | **७,४४१,७४७** | **१७.५५%** |
| प्रत्यक्ष व्यापारिक खर्च | ४९८६६५४ | ५,०५७,८९९ | १.४३% |
| कर्मचारी खर्च | २६४७३९ | ३१७,९६१ | २०.१०% |
| प्रसासनिक खर्च | ८९९०७ | १२१,०५७ | ३४.६५% |
| व्याज खर्च | ५३९०८८ | ७८९,३४७ | ४६.४२% |
| ह्रासकट्टी/अमोरटाइजेसन/ ईम्पेयरमेन्ट खर्च | २०५८२८ | २३७,८७६ | १५.५७% |
| जेखिम व्यवस्था/ ईम्पेयरमेन्ट खर्च | ३४६३२ | ५९,८१० | ७२.७०% |
| अन्य खर्च | १२२९६३ | ११४,७२५ | -६.७०% |
| अन्य व्यवस्था | २२२५८ | २९,१७३ | ३१.०६% |
| चालु कर खर्च | १३३५९३ | १३५,४२६ | १.३७% |
| डेफर्ड कर खर्च/(आम्दानी) | -१०५२९३ | ७२,९८१ | -१६९.३१% |
| कर्मचारी बोनस व्यवस्था | २०७१४ | २०,३१७ | -१.९२% |
| **कुल खर्च** | **६३१५०८८** | **६,९५६,५७२** | **१०.१६%** |
| खुद नाफा | **१५४२०** | ४८५,१७५ | ३०४६.३९% |

स्रोतः सम्बन्धित संस्थानबाट प्राप्त विवरण।

## १.१२ बजार पुँजीकरण

सञ्चालनमा रहेका संस्थानमध्ये सात वटा संस्थान नेपाल स्टक एक्सचेञ्ज लि. मा सूचीकृत छन्। तीमध्ये वित्तीय क्षेत्रका पाँच, सेवा क्षेत्रका एक र जनोपयोगी क्षेत्रको एक रहेका छन्। समग्र बजार पुँजीकरण २०७९ असार मसान्तको तुलनामा २०८० असार मसान्तमा ७.४३ प्रतिशतले वृद्धि भएकोमा सार्वजनिक संस्थानको बजार पुँजीकरण समेत १.८१ प्रतिशतले बढेको छ। २०७९ असार मसान्तको कुल बजार पुँजीकरणमा सरकारी संस्थानको हिस्सा १९.३३ प्रतिशत रहेकोमा २०८० असार मसान्तमा १८.३२ प्रतिशत रहेको छ।सूचीकृत संस्थानको बजार पुँजीकरण स्थिति तालिका १.९ मा उल्लेख गरिएको छ।

तालिका १.९ सूचीकृत संस्थानको बजार पुँजीकरण स्थिति

| | | | | रकम (रू. लाखमा) |
|---|---|---|---|---|
| सि.नं. | सूचीकृत संस्थानको नाम | २०७९ असार मसान्त | २०८० असार मसान्त | परिवर्तन (प्रतिशत) |
| १ | नेपाल दूरसञ्चार कम्पनी लिमिटेड | १५८२०२० | १६३२४२० | ३.१९% |
| २ | कृषि विकास बैङ्क लिमिटेड | ४३६५२० | ३१४६३५ | -२७.९२% |
| ३ | राष्ट्रिय बिमा कम्पनी लिमिटेड | ३५७२९२ | ४२९२६२ | २०.१४% |
| ४ | नागरिक लगानी कोष | ८२२४०५ | १११००४२ | ३४.९८% |
| ५ | हाइड्रोईलेक्ट्रिसिटी इन्भेष्टमेन्ट एण्ड डेभलपमेन्ट कम्पनि लिमिटेड | ४७५२०० | ४१९०७५ | -११.८१% |
| ६ | नेपाल बैङ्क लिमिटेड | ४२९२९६ | ३६५८८१ | -१४.७७% |
| ७. | विशाल बजार कम्पनी लिमिटेड | १४४३६०० | १३७५४३० | -४.७२% |
| **कुल जम्मा** | | **५५४६३३३** | **५६४६७४५** | **१.८१%** |
| **कुल बजार पुँजीकरण** | | **२८६९३४४१** | **३०८२५१९६** | **७.४३%** |
| **कुल बजार पुँजीकरणमा सार्वजनिक संस्थानको बजार पुँजीकरण प्रतिशत** | | **१९.३३** | **१८.३२** | |

**स्रोतः नेपाल स्टक एक्सचेञ्ज लि.।**

## १.१३ विनिवेश तथा निजीकरण गरिएका संस्थानको वर्तमान अवस्था

आर्थिक उदारीकरणको लहरसँगै विश्वका अधिकांश मुलुकहरूले प्रत्यक्ष वा अप्रत्यक्ष रूपमा उदार आर्थिक नीति अवलम्बन गरेको पाइन्छ। तत् पश्चात् अर्थतन्त्रका विविध गतिविधिमा सरकारको संलग्नता कम गर्दै निजीक्षेत्रको संलग्नता तथा सहभागिता बढ्दै गएको देखिन्छ। नेपालमा वि.सं.२०४९ पश्चात् आर्थिक उदारीकरणको नीति अवलम्बनसँगै सार्वजनिक संस्थानको उत्पादकत्व र दक्षता अभिवृद्धि गर्ने, सरकारको वित्तीय एवं प्रशासनिक भार कम गर्ने, सार्वजनिक उद्यममा व्यावसायिकता अभिवृद्धि गरी उत्पादकत्व वृद्धि गर्ने र रोजगारीका अवसर सिर्जना गर्ने उद्देश्यका साथ सार्वजनिक संस्थानको निजीकरण गर्ने कार्यको शुरूवात भयो। सार्वजनिक संस्थानको निजीकरण गर्ने क्रममा केही संस्थान खारेज गरियो भने केही निजीकरण गरियो।

निजीकरण भई सञ्चालनमा रहेका केही सार्वजनिक संस्थानको कार्य सम्पादनस्तर सन्तोषजनक छ भने केही सार्वजनिक संस्थानको कार्यसम्पादनस्तर अपेक्षाकृत सुधार हुन सकेको छैन। निजीकरण गरिएका १८ वटा सार्वजनिक संस्थान मध्ये १० वटा संस्थान नाफामा सञ्चालनमा छन् भने २ वटा घाटामा सञ्चालन भइरहेका छन्। त्यस्तै, छ वटा सार्वजनिक संस्थान बन्द रहेका छन्। निजीकरण गरिएका सार्वजनिक संस्थानको निजीकरण फरक फरक प्रक्रियाबाट गरिएको थियो। शेयर बिक्री प्रक्रियाबाट निजीकरण गरिएका ११ वटा सार्वजनिक संस्थान मध्ये तीनवटा सार्वजनिक संस्थान बन्द रहेका छन्

भने आठवटा नाफामा सञ्चालन भइरहेका छन्। व्यवसाय वा सम्पत्ति बिक्री प्रक्रियाबाट निजीकरण गरिएका तीनवटै संस्थान हाल बन्द रहेका छन्। त्यस्तै, सम्पत्ति बिक्री वा भाडामा दिइएका तीनवटा सार्वजनिक संस्थान मध्ये दुईवटा नाफामा सञ्चालनमा छन्। व्यवस्थापन करारमा दिइएको एउटा संस्थान घाटामा देखिन्छ।

निजीकरण ऐन बमोजिम खारेज भएका १२ संस्थानमध्ये हालसम्म कृषि चुन उद्योग लि. को मात्र कम्पनी रजिष्ट्रारको कार्यालयमा दर्ता खारेजी भई कानुनी रूपमा अस्तित्व समाप्त भएको छ। कृषि औजार कारखाना लि. बन्द रहेकोमा नेपाल सरकार, मन्त्रिपरिषद्को मिति २०७९ भाद्र ३१ को निर्णयानुसार यसलाई राष्ट्रिय आविष्कार केन्द्रलाई सञ्चालन गर्न दिइएको छ भने अन्य खारेजीमा परेका सार्वजनिक संस्थानको कानूनी प्रक्रिया पूरा हुन सकेको छैन।

निजीकरण गरिएका सार्वजनिक संस्थानको सञ्चालन तथा व्यवस्थापनमा विभिन्न समस्या देखापरेका छन्। निजीकरण गर्ने कार्यलाई सार्वजनिक संस्थानको सवलीकरण गर्ने, संस्थान सञ्चालनमा निजी क्षेत्रको भूमिका अभिवृद्धि गर्ने तथा संस्थानमा सरकारको वित्तीय दायित्व कम गर्ने उपायको रूपमा नलिई राजनीतिक दृष्टिकोण र बुझाईमा पृथकता रहन गएकोले पनि समग्र निजीकरणको पाटो ओझेलमा पर्न गएको छ। यसबाट निजीकृत सार्वजनिक संस्थानको व्यवस्थापन चुस्त-दुरूस्त, छरितो र व्यावसायिक हुन सकेको देखिदैंन। निजीकरण गरिएका संस्थान निजीकरणको उद्देश्य विपरित खारेजी हुनु, व्यावसायिक कारोबार बन्द हुनु र खरिदकर्तासँग भएको सम्झौताको प्रभावकारी अनुगमन तथा सुपरिवेक्षण नभई सम्झौता विपरित कार्य हुनुले निजीकरणबाट अपेक्षाकृत रूपमा उपलब्धि हासिल हुन नसकेको अवस्था छ। त्यस्तै, सम्झौतासाथ पेश भएका व्यवसायिक योजना, वित्तीय योजना एवं संगठनात्मक विकास योजना वस्तुगत र लक्ष्य उन्मुख नहुनु, खरिदकर्ताले संस्थानको सुधारमा ध्यान नदिई गैर व्यावसायिक प्रयोजनार्थ उपयोग गर्न खोज्नु जस्ता समस्याले निजीकृत संस्थानबाट उत्पादकत्व वृद्धि, रोजगारी सिर्जना, राजस्वमा योगदान लगायतका आर्थिक गतिविधिमा अपेक्षित योगदान पुऱ्याउन सकेको देखिदैंन। निजीकरण भई खारेजीमा परेका सार्वजनिक संस्थानको विवरण तालिका १.१० मा र निजीकरण गरिएका सार्वजनिक संस्थानको विवरण एवम् हालको अवस्था तालिका १.११ मा उल्लेख गरिएको छ।

### तालिका १.१० निजीकरण भई खारेजी भएका संस्थानको विवरण

| सि.नं. | सार्वजनिक संस्थानको नाम | निजीकरण मिति | विधि/तरिका | विद्यमान अवस्था |
|---|---|---|---|---|
| १ | नेपाल जुट विकास तथा व्यापार कम्पनी | २०५०/११/१२ | खारेजी | बन्द भएको। |
| २ | कृषि आयोजना सेवा केन्द्र | सन् २००१ | खारेजी | बन्द भएको। |
| ३ | सूर्ति विकास कम्पनी | २०५०/११/१२ | खारेजी | बन्द भएको। |
| ४ | हिमाल सिमेन्ट उद्योग लि. | २०६३/१०/१४ | खारेजी | बन्द भएको। |
| ५ | घरेलु सिल्पकला बिक्री भण्डार | २०५९/१०/१७ | खारेजी | बन्द भएको। |

| सि.नं. | सार्वजनिक संस्थानको नाम | निजीकरण मिति | विधि/तरिका | विद्यमान अवस्था |
|---|---|---|---|---|
| ६ | नेपाल कोल लि. | २०५९/०९/१० | खारेजी | बन्द भएको। |
| ७ | हेटौंडा कपडा उद्योग | २०६०/०९/०३ | खारेजी | बन्द भएको। |
| ८ | वीरगञ्ज चिनी कारखाना लि. | २०५९/१०/१६ | खारेजी | बन्द भएको। |
| ९ | नेपाल यातायात संस्थान | २०५९/०८/०३ | खारेजी | बन्द भएको। |
| १० | कृषि चुन उद्योग लि. | २०६४/०९/१५ | खारेजी | बन्द भएको। |
| ११ | नेपाल ड्रिलिङ्ग कम्पनी | सन् २००६ | खारेजी | बन्द भएको। |
| १२. | कृषि औजार कारखाना लिमिटेड | २०५९-१२-०४ | व्यवस्थापन करार | नोक्सानमा संचालन रहेको। |

**स्रोतः सम्बन्धित संस्थानबाट प्राप्त विवरण।**

## तालिका १.११ निजीकृत संस्थानको विवरण र हालको अवस्था

| सि.नं. | सार्वजनिक संस्थानको नाम | निजीकरण मिति | विधि/तरिका | विद्यमान अवस्था |
|---|---|---|---|---|
| १ | भृकुटी कागज कारखाना | २०४९/०७/०५ | व्यवसाय एवं सम्पत्ति बिक्री | बन्द अवस्थामा रहेको। |
| २ | हरिसिद्धि इटा टायल कारखाना | २०४९/०७/१४ | व्यवसाय एवं सम्पत्ति बिक्री | बन्द अवस्थामा रहेको। |
| ३ | बाँसबारी छाला जुत्ता कारखाना | २०४९/०७/२४ | व्यवसाय एवं सम्पत्ति बिक्री | बन्द अवस्थामा रहेको। |
| ४ | चलचित्र विकास कम्पनी लि. | २०५०/०७/२६ | शेयर बिक्री | बन्द अवस्थामा रहेको। |
| ५ | बालाजु कपडा उद्योग | २०५०/०८/१७ | शेयर बिक्री | बन्द अवस्थामा रहेको। |
| ६ | काँचो छाला सङ्कलन तथा बिक्री केन्द्र | २०५०/०८/२८ | शेयर बिक्री | बन्द अवस्थामा रहेको। |
| ७ | नेपाल विटुमिन तथा व्यारेल उद्योग | २०५१/०३/०७ | शेयर बिक्री | नाफामा सञ्चालनमा रहेको। |
| ८ | नेपाल ल्यूव आयल | २०५१/०२/२२ | शेयर बिक्री | नाफामा सञ्चालनमा रहेको। |
| ९ | नेपाल ढलौट उद्योग लि. | २०५२/१२/१२ | शेयर बिक्री | नाफामा सञ्चालनमा रहेको। |
| १० | रघुपति जुट मिल्स | २०५३/०४/३० | शेयर बिक्री | नाफामा सञ्चालनमा रहेको। |
| ११ | नेपाल बैङ्क लि. | २०६३/०६/२१ | शेयर बिक्री | नाफामा सञ्चालनमा रहेको। |
| १२ | नेपाल चिया विकास निगम | २०५७/०३/१४ | शेयर बिक्री | नाफामा सञ्चालनमा रहेको। |
| १३ | बुटवल पावर कम्पनी | २०५९/०९/१९ | शेयर बिक्री | नाफामा सञ्चालनमा रहेको। |
| १४ | नेपाल दूरसञ्चार कं. लि. | २०६४/०९/०६ | शेयर बिक्री | नाफामा सञ्चालनमा रहेको। |
| १५ | भक्तपुर इटा टायल कारखाना लि. | २०६०/०९/२२ | सम्पत्ति बिक्री र भाडा | नाफामा सञ्चालनमा रहेको। |
| १६ | विराटनगर जुट मिल्स | २०५३/०९/०४ | व्यवस्थापन करार | घाटामा सञ्चालनमा रहेको। |
| १७ | लुम्बिनी चिनी कारखाना | २०६२/०९/२४ | सम्पत्ति बिक्री र भाडा | घाटामा सञ्चालनमा रहेको। |
| १८ | नेपाल रोजिन एण्ड टर्पेण्टाईन लि. | २०६३।०१।२९ | सम्पत्ति बिक्री र भाडा | नाफामा सञ्चालनमा रहेको। |

**स्रोतः सम्बन्धित संस्थानबाट प्राप्त विवरण।**

***द्रष्टव्यः*** *नेपाल दूरसञ्चार कम्पनी लि. को ८.४७ प्रतिशत र नेपाल बैङ्क लि. को ३७.९६ प्रतिशत शेयर निजीकरण ऐनबमोजिम विनिवेश गरिएको कारणले साविकदेखि नै निजीकरणको सूचीमा समावेश हुँदैआएका छन्।*

***नोटः*** *अन्तिम लेखा परीक्षण भइसकेका सार्वजनिक संस्थानको अङ्क मिलान, सार्वजनिक संस्थान एकापसमा गाभिई हिसाब मिलान तथा नयाँ थप भएकाको हिसाब थप हुन गएको कारणले सञ्चालन आय, प्रशासनिक खर्च, खुद नाफा/नोक्सान, सञ्चित नाफा/नोक्सान, शेयरधनीकोष र कोषमा व्यवस्था नगरिएको दायित्व शीर्षकको आर्थिक वर्ष २०७९/८० को रकम सार्वजनिक संस्थानको वार्षिक समीक्षा २०८० मा र यस समीक्षा पुस्तिकामा हेरफेर हुनगएको छ।*

## १.१४ सार्वजनिक संस्थान सुधारका प्रयास

राष्ट्रिय हित वा सर्वसाधारण जनताको स्वास्थ्य, सुविधा र आर्थिक हित कायम गर्नको लागि वस्तु तथा सेवाको उत्पादन तथा आपूर्ति प्रणालीलाई विश्वसनीय, प्रतिस्पर्धी र सहज बनाउने उद्देश्यका साथ सार्वजनिक संस्थानको स्थापना गरिएको हो। वस्तु तथा सेवाको आपूर्ति शृङ्खलामा नीजि क्षेत्रको प्रवेश भएसँगै सार्वजनिक संस्थानलाई समेत पारदर्शी, प्रतिस्पर्धी, सवल र सक्षम संस्थाको रूपमा स्थापित गराउन तथा आर्थिक, वित्तीय र व्यवस्थापकीय कार्यकुशलता अभिवृद्धि गरी संस्थानको कार्यसम्पादनस्तरमा सुधार ल्याउनको लागि प्रत्येक वर्ष बजेट वक्तव्य मार्फत सार्वजनिक संस्थानको नीतिगत, कानूनी, संरचनागत र संस्थागत सुधारका प्रयास मार्फत संस्थानका क्रियाकलापहरूमा पारदर्शीता र उत्तरदायित्व प्रवर्द्धन गर्ने, प्रतिस्पर्धी क्षमता अभिवृद्धि गर्ने, उद्यमशिलता र व्यावसायिकताको विकास गर्ने, कार्यगत स्वायत्तता प्रदान गर्ने जस्ता कार्य हुँदै आएका छन्। त्यसैगरी आर्थिक उदारीकरणको नीति अनुरूप सार्वजनिक संस्थान विनिवेश गर्ने, गाभ्ने वा खारेज गर्ने, रणनीतिक साझेदार भित्र्याउने तथा नागरिकको स्वामित्व कायम गरी संस्थानको प्रतिस्पर्धी क्षमता अभिवृद्धि गर्ने जस्ता सुधारका प्रयास निरन्तर हुँदै आएका छन्।

सार्वजनिक संस्थानमा सुधारका लागि समय समयमा गठन भएका अध्ययन तथा सुझाव समितिको सिफारिसका आधारमा सुधारका प्रयास अवलम्बन गरिएका छन्। आर्थिक उदारीकरणको नीति अवलम्बन गरे पश्चात् हालसम्म ३० वटा संस्थानको निजीकरण भएको छ। निजीकरण पश्चात् संस्थानमा लगानी बढ्ने, संस्थानको उत्पादन, उत्पादकत्व र कार्यकुशलतामा अभिवृद्धि हुने तथा थप रोजगारीका अवसर सिर्जना हुने अपेक्षा गरिएतापनि निजीकरण गरिएका संस्थानको व्यावसायिक कार्यकुशलता अभिवृद्धि र लगानी विस्तार हुन सकेको छैन।

संस्थानको व्यवसायिक कार्यकुशलता तथा वित्तीय दक्षता अभिवृद्धि गरी सेवा प्रवाहमा प्रभावकारिता हासिल गर्न र उद्यमशीलता प्रवर्द्धन गर्नको लागि एकै प्रकृतिका संस्थानलाई एक आपसमा गाभ्ने लगायतका सुधार प्रयास निरन्तर भइरहेको छ। यसै सिलसिलामा एन. आई. डि. सि. डेभलपमेण्ट बैङ्क लि. लाई राष्ट्रिय वाणिज्य बैङ्कमा र राष्ट्रिय बीउ विजन कम्पनी लि. लाई कृषि सामग्री कम्पनी लि. मा गाभिएको छ भने नेशनल ट्रेडिङ्ग लिमिटेड र नेपाल खाद्य संस्थानलाई एकीकृत गरी खाद्य व्यवस्था तथा व्यापार कम्पनी लि. बनाइएको छ।

दुर्गम क्षेत्रमा अत्यावश्यक वस्तु र सेवाको आपूर्ति गर्न, मूल्य स्थिरता कायम गर्न तथा भूकम्प, बाढी पहिरो, महामारी लगायतका विपद्को समयमा सार्वजनिक संस्थानले निर्वाह गरेको भूमिकाबाट संस्थानको आवश्यकता सम्पुष्टि भएको छ। भूकम्प तथा महामारी लगायतको सङ्कटको समयमा खाद्य व्यवस्था तथा व्यापार कम्पनी लि., नेपाल आयल निगम, नेपाल वायुसेवा निगम, नेपाल दूरसञ्चार कम्पनी, साल्ट ट्रेडिङ्ग कर्पोरेशन तथा नेपाल औषधी लिमिटेडले वस्तु तथा सेवाको आपूर्तिमा पुऱ्याएको

योगदान प्रशंसनीय रहेको थियो। यस तथ्यलाई मनन् गर्दै सर्वसाधारण जनताको सुविधा र आर्थिक हित कायम गर्नको लागि सार्वजनिक संस्थानलाई थप कार्यकुशल बनाउन र व्यावसायिक दक्षता अभिवृद्धि गर्न नविन प्रविधी र व्यवस्थापकीय प्रणालीको प्रयोग गर्ने, व्यावसायिक निर्णय प्रक्रियामा स्वायत्तता प्रदान गर्ने जस्ता प्रयास मार्फत संस्थानको सुधार गर्ने कार्य निरन्तर भइरहेका छन्। सार्वजनिक संस्थानको वित्तीय कार्यकुशलता एवंम् व्यावसायिक दक्षता अभिवृद्धि गर्न तथा पारदर्शी र प्रतिस्पर्धी क्षमताको विकास गर्न सुधार प्रक्रियालाई निरन्तरता दिन आवश्यक देखिन्छ।

कमजोर तथा पछाडि परेका सिमान्तकृत वर्गलाई सामाजिक न्याय एवंम् सामाजिक सुरक्षाको प्रत्याभूति गर्नु राज्यको जिम्मेवारी र दायित्व भित्र पर्दछ। यस सन्दर्भमा सरकारको उपस्थितिलाई सार्थक बनाउन बन्द रहेका संस्थान सञ्चालन गर्ने प्रयास भएको छ। यसबाट निष्क्रिय रहेको राज्यको स्रोत-साधनको सदुपयोग तथा परिचालन हुने र सार्वजनिक सेवा प्रवाहका साथै वस्तु तथा सेवाको उत्पादन, वितरण र उपभोग प्रणालीमा सुधार हुने अपेक्षा गरिएको छ।

बन्द अवस्थामा रहेका सार्वजनिक संस्थानलाई आवश्यकता, औचित्य एवं सम्भाव्यताका आधारमा पुनःसंरचना गरी सञ्चालनमा ल्याउने, सञ्चालन तथा व्यवस्थापनमा रणनीतिक साझेदार भित्र्याउने, शेयर विनिवेश तथा खारेजी गर्ने, सरकारकै स्वामित्वमा सञ्चालन गर्नुपर्ने प्रकृतिका संस्थानलाई पुँजी वृद्धि गरी क्षमता अभिवृद्धि गर्ने, संस्थान सञ्चालनको प्रभावकारी अनुगमन-मूल्याङ्कन गर्ने कार्यलाई तीव्रता दिने जस्ता विविध पक्षमा सुधार गरिदै आएको छ।

# खण्ड दुई
# सार्वजनिक संस्थानको क्षेत्रगत समीक्षा

सार्वजनिक संस्थानको कारोवारको प्रकृतिका आधारमा संस्थानलाई औद्योगिक, व्यापारिक, सेवा, सामाजिक, जनोपयोगी तथा वित्तीय गरी छ वटा क्षेत्रमा विभाजन गरी विश्लेषण गरिएको छ। यस खण्डमा क्षेत्रगत आधारमा संस्थानको सञ्चालन आय, प्रशासनिक खर्च, खुद नाफा/नोक्सान, सञ्चित नाफा/नोक्सान तथा ऋण/शेयर अनुपातको विश्लेषण गरिएको छ। खुद नाफा/नोक्सानको गणनामा संस्थानका सबै किसिमका आयलाई समावेश गरिएको छ। प्रशासनिक खर्चमा कर्मचारी खर्च (कर्मचारी वोनस व्यवस्था बाहेक) प्रति कर्मचारी उत्पादकत्व समेतलाई समावेश गरिएको छ। सार्वजनिक ऋण व्यवस्थापन कार्यालयबाट प्राप्त विवरणको आधारमा सरकारको कुल लगानी र लाभांशको समेत विश्लेषण गरिएको छ।

## २.१ औद्योगिक क्षेत्र

औद्योगिक क्षेत्रमा दश सार्वजनिक संस्थान रहेका छन्। यस क्षेत्रका संस्थानको कुल सञ्चालन आय आर्थिक वर्ष २०७८/७९ मा रू. ६ अर्ब ४२ करोड ३१ लाख रहेकोमा आर्थिक वर्ष २०७९/८० मा २१.८७ प्रतिशतले कमी भई रू. ५ अर्ब १ करोड ८२ लाख रहेको छ। हेटौंडा सिमेन्ट उद्योग लिमिटेड, नेपाल औषधी लिमिटेड र उदयपुर सिमेन्ट उद्योगको आर्थिक वर्ष २०७८/७९ को तुलनामा समीक्षा अवधिमा क्रमश: ४२.९५, ३०.८४ र ५२.९३ प्रतिशतले सञ्चालन आय घटेका कारण समग्र औद्योगिक क्षेत्रका संस्थानको सञ्चालन आयमा कमी आएको हो। जनकपुर चुरोट कारखाना लिमिटेड, नेपाल ओरिण्ड म्याग्नासाइट प्रा. लि., बुटवल धागो कारखाना लि., नेपाल मेटल कम्पनी लिमिटेड र धौवादी फलाम कम्पनी लिमिटेड सञ्चालनमा रहेका छैनन्।

### तालिका २.१ आर्थिक वर्ष २०७९/८० मा औद्योगिक क्षेत्रका सार्वजनिक संस्थानको वित्तीय स्थिति

रकम (रू. लाखमा)

| क्र.सं. | सार्वजनिक संस्थान | सञ्चालन आय रकम | प्रशासनिक खर्च(कर्मचारी खर्च समेत) रकम | खुद नाफा/नोक्सान रकम | सञ्चित नाफा/नोक्सान रकम | डेब्ट इक्विटी अनुपात (प्रतिशत) |
|---|---|---|---|---|---|---|
| १ | दुग्ध विकास संथान | ३६१८७.१३ | २६६४.२७ | (४८४२.२८) | (१८५०६.८५) | ४०.५१ |
| २ | जडिबुटी उत्पादन तथा प्रशोधन कम्पनी लि. | १६१५.६१ | ५३७.३१ | (२८४.३९) | २७०७.३२ | ३१.२५ |
| ३ | हेटौंडा सिमेन्ट उद्योग लि. | ५८४१.५० | १३८३.३४ | (२५४८.७३) | (११५८६.०७) | (४६.५३) |
| ४ | जनकपुर चुरोट कारखाना लि. | ०.०० | ३६.९५ | ५.०२ | (२९०९२.१४) | (१०४.७०) |
| ५ | नेपाल औषधि लिमिटेड | ३५६.८६ | ९०९.२६ | (१५५४.९२) | (२१३५९.३४) | (६१.२०) |
| ६ | उदयपुर सिमेन्ट उद्योग लि. | ६१८१.४० | १६६३.६० | (३६२८.८८) | (५७८८२.६५) | ४४.६९ |

| | | | | | | |
|---|---|---|---|---|---|---|
| ७ | नेपाल ओरिण्ड म्याग्नासाइट प्रा.लि. | ०.०० | ५१.१२ | (१६५८.७४) | (५०३७६.०६) | (३७.९७) |
| ८ | बुटवल धागो कारखाना लि. | ०.०० | ३२.७९ | (३४३.९०) | (२००१२.५७) | (१०.९५) |
| ९ | नेपाल मेटल कम्पनी लि. | ०.०० | ०.०० | ०.०० | ०.०० | (३७.२६) |
| १० | धौवादी फलाम कम्पनी लि. | ०.०० | ९६.५२ | ६.२६ | ४२.६२ | ०.०० |
| | **जम्मा** | ५०१८२.४९ | ७३७५.१५ | (१४८५०.५६) | (२०६०६५.७४) | १०.७६ |

**स्रोतः सम्बन्धित संस्थानबाट प्राप्त विवरण।**

आर्थिक वर्ष २०७८/७९ मा यस क्षेत्रका संस्थानको कुल प्रशासनिक खर्च रू.७० करोड २८ लाख रहेकोमा आर्थिक वर्ष २०७९/८० मा ४.९४ प्रतिशतले वृद्धि भई रू.७३ करोड ७५ लाख पुगेको छ। सञ्चालनमा रहेका संस्थानमध्ये हेटौंडा सिमेन्ट उद्योगको प्रशासनिक खर्च अघिल्लो आर्थिक वर्षको तुलनामा आर्थिक वर्ष २०७९/८० मा अवधिमा १०.०२ प्रतिशतले बढी भएको छ। त्यस्तै, आर्थिक वर्ष २०७८/७९ मा यस क्षेत्रको समग्र खुद नोक्सानी रू.७६ करोड ९४ लाख रहेकोमा समीक्षा अवधिमा ९३.०१ प्रतिशतले वृद्धि भई रू.१ अर्ब ४८ करोड ५० लाख कायम भएको छ। विगतमा नाफामा रहेको जडिबुटी उत्पादन तथा प्रशोधन कम्पनी लिमिटेड रू. २ करोड ८४ लाख नोक्सानीमा छ भने गत वर्ष नाफामा रहेको उदयपुर सिमेन्ट उद्योग यस वर्ष रू.३६ करोड २९ लाख नोक्सानमा छ। यस आर्थिक वर्षमा जनकपुर चुरोट कारखाना लिमिटेड सञ्चालन नभएको भएता पनि भवन तथा जग्गा भाडा आम्दानीका कारण ५ लाख नाफामा रहेको छ। धौवादी फलाम कम्पनी गत आर्थिक वर्षमा २८ लाख नोक्सानी भएकोमा समीक्षा अवधिमा रू.६ लाख २६ हजार नाफामा रहेको देखिन्छ। बाँकी अन्य सबै संस्थान नोक्सानीमा रहेका कारण समग्र औद्योगिक क्षेत्रको नोक्सानी बढेको देखिन्छ। यस क्षेत्रका संस्थानको कुल सञ्चित नोक्सानी आर्थिक वर्ष २०७८/७९ मा रू. १८ अर्ब ९५ करोड ८२ लाख रहेकोमा आर्थिक वर्ष २०७९/८० मा कुल सञ्चित नोक्सानी ८.६९ प्रतिशतले वृद्धि भई रू. २० अर्ब ६० करोड ६५ लाख पुगेको छ।

औद्योगिक क्षेत्रका संस्थानको शेयरधनी कोष आर्थिक वर्ष २०७८/७९ मा रू. ४ अर्ब ९ करोड ९९ लाख ऋणात्मक रहेकोमा यो रकम आर्थिक वर्ष २०७९/८० मा ३८.३८ प्रतिशतले वृद्धि भई रू. ५ अर्ब ६७ करोड ३५ लाख ऋणात्मक रहेको छ। समीक्षा अवधिमा यस क्षेत्रका संस्थानको औषत डेब्ट इक्विटी अनुपात १०.७६ प्रतिशत रहेको छ।

यस क्षेत्रका संस्थानमा आर्थिक वर्ष २०७८/७९ मा २ हजार १ सय ५० जना कर्मचारी कार्यरत रहेकोमा आर्थिक वर्ष २०७९/८० मा ७.५८ प्रतिशतले घटी कर्मचारी संख्या १ हजार ९ सय ८७ रहेको छ।सञ्चालन आयमा प्रति कर्मचारी उत्पादकत्व रू.२५ लाख २६ हजार कायम भएको देखिन्छ।

सार्वजनिक ऋण व्यवस्थापन कार्यालयको अभिलेख अनुसार यस क्षेत्रका संस्थानले आर्थिक वर्ष २०७८/७९ सम्म नेपाल सरकारलाई तिर्न बाँकी ऋण रू. ८ अर्ब ५१ करोड ८७ लाख रहेकोमा आर्थिक वर्ष २०७९/८० मा सो रकम यथावत रहेको देखिन्छ। आर्थिक वर्ष २०७८/७९ सम्ममा यस क्षेत्रका संस्थानमा नेपाल सरकारको शेयर लगानी रू. ६ अर्ब २५ करोड ३५ लाख रहेकोमा समीक्षा अवधिमा १.०७ प्रतिशतले वृद्धि भई रू.६ अर्ब ३२ करोड ०७ लाख कायम भएको छ। आर्थिक वर्ष २०७८/७९ सम्म कोषमा व्यवस्था नभएको तथा सम्भावित दायित्व रू. ४ अर्ब १२ करोड ५१ लाख रहेकोमा आर्थिक वर्ष २०७९/८० मा १०.४२ प्रतिशतले कमी भई रू.३ अर्ब ६९ करोड ५४ लाख रहेको देखिन्छ।

## २.२ व्यापारिक क्षेत्र

व्यापारिक क्षेत्रमा चार सार्वजनिक संस्थान रहेका छन्। यस क्षेत्रका संस्थानको कुल सञ्चालन आय गत आर्थिक वर्ष २०७८/७९ मा रू. ३ खर्ब ४८ अर्ब ४३ करोड ८४ लाख रहेकोमा आर्थिक वर्ष २०७९/८० मा ११.८७ प्रतिशतले वृद्धि भई रू.३ खर्ब ८९ अर्ब ८० करोड ८९ लाख पुगेको छ। नेपाल वन निगम लिमिटेडको सञ्चालन आयमा अघिल्लो आर्थिक वर्षको तुलनामा कमी आएता पनि अन्य संस्थानको सञ्चालन आयमा वृद्धि भएको छ। पेट्रोलियम पदार्थको खपत तथा मूल्य समायोजन समेतका कारण नेपाल आयल निगमको सञ्चालन आयमा ११.६४ प्रतिशत वृद्धि भएको हुँदा समग्रमा यस क्षेत्रका संस्थानको कुल सञ्चालन आयमा वृद्धि भएको छ।

**तालिका २.२ आर्थिक वर्ष २०७९/८० मा व्यापारिक क्षेत्रका सार्वजनिक संस्थानको वित्तीय स्थिति**

रकम (रू. लाखमा)

| क्र.सं. | सार्वजनिक संस्थान | सञ्चालन आय | प्रशासनिक खर्च(कर्मचारी खर्च समेत) रकम | खुद नाफा/ नोक्सान | सञ्चित नाफा/ नोक्सान | डेब्ट इक्विटी अनुपात (प्रतिशत) |
|---|---|---|---|---|---|---|
| १. | कृषि सामग्री कम्पनी लि. | ५६२९२.४६ | ३२८०.३८ | ३३५.२२ | १६४०७.७० | ०.०० |
| २ | खाद्य व्यवस्था तथा व्यापार कम्पनी लि. | १५९६६.४७ | ४७६९.७६ | १२९२.६२ | (७८२२.१५) | १४.६९ |
| ३ | नेपाल आयल निगम लि. | ३८२४९२४.३९ | १७३७२.९७ | ११७२२९.७८ | (४८५८९.२७) | ५६.९९ |
| ४ | नेपाल वन निगम लिमिटेड | ९०५.५९ | ३४७.८९ | (७४३.३५) | ७२४.४८ | ०.०० |
| | **जम्मा** | ३८९८०८८.९१ | २५७७१.०० | ११८११४.२७ | (३९२७९.२३) | १७.९२ |

**स्रोतः सम्बन्धित संस्थानबाट प्राप्त विवरण।**

आर्थिक वर्ष २०७८/७९ मा यस क्षेत्रका संस्थानको कुल प्रशासनिक खर्च रू.२ अर्ब ४४ करोड ६१ लाख रहेकोमा सो खर्च आर्थिक वर्ष २०७९/८० मा ५.३६ प्रतिशतले वृद्धि भई रू.२ अर्ब ५७ करोड ७१ लाख पुगेको छ। त्यस्तै, आर्थिक वर्ष २०७८/७९ मा यस क्षेत्रको समग्र खुद नोक्सानी रू.३७ अर्ब ५९ करोड ९५ लाख रहेकोमा समीक्षा अवधिमा खुद नाफा रू.११ अर्ब ८१ करोड १४

लाख पुगेको छ। त्यसैगरी आ.व. २०७८/७९ मा कुल सञ्चित नोक्सानी रू.१६ अर्ब ८२ करोड ३१ लाख रहेकोमा समीक्षा अवधिमा ७६.६५ प्रतिशतले कमी भई रू.३ अर्ब ९२ करोड ७९ लाख सञ्चित नोक्सानी रहेको छ। नेपाल आयल निगम आ.व. २०७८/७९ मा रू.३८ अर्ब १७ करोड ७८ लाख खुद नोक्सानी रहेकोमा पेट्रोलियम पदार्थको स्वचालित मूल्य प्रणालीको कारण समीक्षा अवधिमा रू.११ अर्ब ७२ करोड ३० लाख खुद नाफामा रहेको छ र नेपाल वन निगम लिमिटेड आ.व. २०७८/७९ मा रू.२ करोड २६ लाख खुद नोक्सानीमा रहेकोमा समीक्षा अवधिमा पनि रू.७ करोड ४३ लाख खुद नोक्सानीमा नै रहेको छ। नेपाल आयल निगमको खुद नाफा बढेको कारण समग्रमा यो क्षेत्र खुद नाफामा रहेको छ।

व्यापारिक क्षेत्रका संस्थानको औसत डेब्ट इक्विटी अनुपात १७.९२ प्रतिशत रहेको छ। यस क्षेत्रका संस्थानको शेयरधनी कोष गत आर्थिक वर्षको तुलनामा १६७.८२ प्रतिशतले वृद्धि भई समीक्षा अवधिमा रू. २० अर्ब ६३ करोड ८६ लाख पुगेको छ। गत वर्ष जस्तै नेपाल आयल निगमको शेयर धनीकोष सकारात्मक रहेको देखिन्छ।

यस क्षेत्रका संस्थानमा आर्थिक वर्ष २०७८/७९ मा १ हजार ३ सय १८ कर्मचारी कार्यरत रहेकोमा आर्थिक वर्ष २०७९/८० मा १२.७५ प्रतिशतले वृद्धि भई कर्मचारी संख्या १ हजार ४ सय ८६ पुगेको छ। सञ्चालन आयमा प्रति कर्मचारी उत्पादकत्व वृद्धि भई रू.२६ करोड २३ लाख २१ हजार कायम भएको देखिन्छ।

सार्वजनिक ऋण व्यवस्थापन कार्यालयको अभिलेखअनुसार यस क्षेत्रका संस्थानले आर्थिक वर्ष २०७८/७९ सम्म नेपाल सरकारलाई तिर्न बाँकी ऋण रू.७ अर्ब ४८ करोड १४ लाख रहेकोमा ५३.१२ प्रतिशतले कमी भई आर्थिक वर्ष २०७९/८० मा रू.३ अर्ब ५० करोड ७३ लाख रहेको छ। आर्थिक वर्ष २०७८/७९ सम्ममा यस क्षेत्रका संस्थानमा नेपाल सरकारको शेयर लगानी रू.१३ अर्ब २ करोड ५६ लाख रहेकोमा समीक्षा अवधिको अन्त्यसम्ममा नेपाल सरकारको शेयर लगानी रू. १२ अर्ब ८८ करोड ८१ लाख कायम रहेको छ। आर्थिक वर्ष २०७८/७९ मा कोषमा व्यवस्था नभएको तथा सम्भावित दायित्व रू. ४ अर्ब ३१ करोड ९३ लाख रहेकोमा आर्थिक वर्ष २०७९/८० मा २५.७१ प्रतिशतले वृद्धि भई रू. ५ अर्ब ४२ करोड ९९ लाख पुगेको छ। समीक्षा अवधिमा कृषि सामग्री कम्पनी लिमिटेड र नेपाल आयल निगमको कोषमा व्यवस्था नभएको तथा सम्भावित दायित्व क्रमश: रू. ५ अर्ब २२ करोड ८९ लाख र रू. १३ करोड ७० लाख तथा नेपाल वन निगम लिमिटेडको ६ करोड ३९ लाख रहेकोले यस क्षेत्रको समग्र सम्भावित दायित्व बढ्न गएको छ।

## २.३ सेवा क्षेत्र

सेवा क्षेत्रमा रहेका नौ सार्वजनिक संस्थानको आर्थिक वर्ष २०७८/७९ मा कुल सञ्चालन आय रू.२५ अर्ब २९ करोड ५७ लाख रहेकोमा आर्थिक वर्ष २०७९/८० मा ४९.७१ प्रतिशतले वृद्धि भई रू. ३७ अर्ब ८७ करोड ११ लाख पुगेको छ। नेपाल पारवहन तथा गोदाम व्यवस्था कम्पनी लिमिटेड र विशाल बजार कम्पनी लिमिटेड बाहेक अन्य सबै संस्थानको सञ्चालन आय आ.व. २०७८/७९ को तुलनामा २०७९/८० मा वृद्धि भएको छ।

**तालिका २.३ आर्थिक वर्ष २०७९/८० मा सेवा क्षेत्रका सार्वजनिक संस्थानको वित्तीय स्थिति**

रकम (रू. लाखमा)

| क्र.सं. | संस्थान | सञ्चालन आय | प्रशासनिक खर्च(कर्मचारी खर्च समेत) रकम | खुद नाफा/ नोक्सान | सञ्चित नाफा/ नोक्सान | डेब्ट इक्विटी अनुपात (प्रतिशत) |
|---|---|---|---|---|---|---|
| १ | औद्योगिक क्षेत्र व्यवस्थापन लि. | १३२५१.४१ | २९२५.३५ | ६०६.९५ | ६२८७.८३ | ०.०० |
| २ | नेपाल पारवहन तथा गोदाम व्यवस्था कं.लि. | २५१२.४९ | १०४०.७४ | ४११.४७ | ५४७६.४६ | ०.०० |
| ३ | नेपाल वायुसेवा निगम | २३३६८९.२२ | ३६७२०.०७ | (६५२९.३९) | (१६३७६३.२९) | (६१६.३१) |
| ४ | राष्ट्रिय उत्पादकत्व तथा आर्थिक विकास के.लि. | २२.८७ | ६४.६१ | (४३.३४) | (११२९.१४) | (९५.४९) |
| ५ | नेपाल नागरिक उड्डयन प्राधिकरण | १२४५१९.७७ | ३२९२०.५९ | २६३७६.६५ | १८०४८१.५२ | ८.०३ |
| ६ | नेपाल पूर्वाधार निर्माण कम्पनी लि. | ३५.७६ | ५८.०८ | ८२.२७ | ४३.३१ | ०.३६ |
| ७ | साझा यातायात सहकारी संस्था लि. | २१८२.३० | २७०.०५ | १८१८.४८ | ०.०० | ०.०० |
| ८ | नेपाल रेल्वे कम्पनी लि. | ६९५.८७ | ३४१.२६ | (१९९६.२१) | (५५९६.८१) | (१०१.९२) |
| ९ | विशाल बजार कम्पनी लि. | १८०१.२१ | ५१८.२६ | १४७३.६२ | ११४६१.४२ | ०.०० |
| | **जम्मा** | ३७८७१०.८८ | ७४८५९.०२ | २२२००.५० | ३३२६१.२९ | (८९.४८) |

**स्रोतः सम्बन्धित संस्थानबाट प्राप्त विवरण।**

यस क्षेत्रका संस्थानको आर्थिक वर्ष २०७८/७९ मा कुल प्रशासनिक खर्च रू.६ अर्ब ३७ करोड ४ लाख रहेकोमा सो खर्च आर्थिक वर्ष २०७९/८० मा १७.५१ प्रतिशतले वृद्धि भई रू.७ अर्ब ४८ करोड ५९ लाख पुगेको छ। आर्थिक वर्ष २०७८/७९ मा यस क्षेत्रको समग्र खुद नोक्सानी रू.५ करोड ३० लाख रहेकोमा समीक्षा अवधिमा खुद नाफा ४२८८.६७ प्रतिशतले बढेर रू.२ अर्ब २२ करोड पुगेको छ। यस क्षेत्रको कुल सञ्चित नाफा गत वर्षको तुलनामा २४.१५ प्रतिशतले वृद्धि भई रू.३ अर्ब ३२ करोड ६१ लाख पुगेको छ। सबैभन्दा धेरै नोक्सानीमा रहेको नेपाल वायुसेवा निगमको खुद नोक्सानी आ.व. २०७८/७९ को तुलनामा आर्थिक वर्ष २०७९/८० मा ६१.६६ प्रतिशतले वृद्धि भएको, नेपाल नागरिक उड्डयन प्राधिकरणको नाफा १०१.७८ प्रतिशतले वृद्धि भएकोले समग्रमा यस क्षेत्रको खुद नाफामा सुधार देखिएको हो।

सेवा क्षेत्रका संस्थानको औसत डेब्ट इक्विटी अनुपात ८९.४८ प्रतिशत रहेको छ। यस क्षेत्रका संस्थानको शेयरधनीकोष आर्थिक वर्ष २०७८/७९ मा रू.२ खर्ब ५१ अर्ब ६५ करोड ४१ लाख रहेकोमा आर्थिक वर्ष २०७९/८० मा ६४.२३ प्रतिशतले वृद्धि भई रू.४ खर्ब १३ अर्ब ३० करोड १० लाख पुगेको छ। सेवा क्षेत्रका संस्थानमा आर्थिक वर्ष २०७८/७९ मा ३ हजार ३ सय ३६ जना कर्मचारी कार्यरत रहेकोमा आर्थिक वर्ष २०७९/८० मा ३४.९५ प्रतिशतले वृद्धि भई कर्मचारी संख्या ४ हजार ५ सय २ रहेको छ।सञ्चालन आयमा प्रति कर्मचारी उत्पादकत्व वृद्धि भई रू.८४ लाख १२ हजार कायम भएको देखिन्छ।

सार्वजनिक ऋण व्यवस्थापन कार्यालयको अभिलेख अनुसार यस क्षेत्रका संस्थानमा आर्थिक वर्ष २०७८/७९ सम्म नेपाल सरकारको ऋण रू.३० अर्ब ८ करोड ८८ लाख रहेकोमा आर्थिक वर्ष २०७९/८० मा २०.०९ प्रतिशतले वृद्धि भई रू.३६ अर्ब १३ करोड ४० लाख पुगेको छ। नेपाल नागरिक उड्डयन प्राधिकरणमा आ.व.२०७९/८० मा रू. ३ अर्ब २ करोड ४८ लाख थप ऋण लगानी भएको छ। आर्थिक वर्ष २०७८/७९ सम्म यस क्षेत्रका संस्थानमा नेपाल सरकारको शेयर लगानी रू.७३ अर्ब ४१ करोड ३४ लाख रहेकोमा समीक्षा अवधिको अन्त्यसम्म नेपाल सरकारको शेयर लगानी ४.२८ प्रतिशतले वृद्धि भई रू.७६ अर्ब ५५ करोड ७१ लाख रहेको अवस्था छ। यस आर्थिक वर्षमा नेपाल सरकारले यस क्षेत्रका संस्थानबाट रू.६० करोड ३३ लाख लाभांश रकम प्राप्त गरेको छ र यो लाभांश रकम औद्योगिक क्षेत्र व्यवस्थापन लिमिटेड र नेपाल नागरिक उड्डयन प्राधिकरणबाट प्राप्त भएको हो। आर्थिक वर्ष २०७८/७९ सम्म कोषमा व्यवस्था नभएको तथा सम्भावित दायित्व रू. ४ अर्ब ५१ करोड २४ लाख रहेकोमा आर्थिक वर्ष २०७९/८० मा १०.९८ प्रतिशतले कमी भई रू.४ अर्ब १ करोड ७० लाख रहेको अवस्था छ। समीक्षा अवधिमा औद्योगिक क्षेत्र व्यवस्थापन लिमिटेड, नेपाल पारवहन तथा गोदाम व्यवस्था कम्पनी लिमिटेड, राष्ट्रिय उत्पादकत्व तथा आर्थिक विकास केन्द्र लिमिटेड र नागरिक उडयन प्राधिकरणको कोषमा व्यवस्था नभएको तथा सम्भावित दायित्व क्रमश: रू.१ करोड ९८ लाख, रू.१ करोड ७ लाख, रू.२ करोड ७९ लाख र रू.३ अर्ब ९५ करोड ८६ लाख रहेको छ।

## २.४ सामाजिक क्षेत्र

सामाजिक क्षेत्रका पाँच संस्थानको कुल सञ्चालन आय आर्थिक वर्ष २०७८/७९ मा रू.३ अर्ब १८ करोड ४७ लाख रहेकोमा आर्थिक वर्ष २०७९/८० मा २०.९५ प्रतिशतले वृद्धि भई रू.३ अर्ब ८५ करोड १९ लाख पुगेको छ। नेपाल टेलिभिजनको आ.व. २०७९/८० को सञ्चालन आयमा आ.व.२०७८/७९ को तुलनामा कमी आएको छ भने अन्य संस्थानको सञ्चालन आयमा वृद्धि भएको छ।

### तालिका २.४ आर्थिक वर्ष २०७९/८० मा सामाजिक क्षेत्रका सार्वजनिक संस्थानको वित्तीय स्थिति

रकम (रू. लाखमा)

| क्र.सं. | संस्थान | सञ्चालन आय रकम | प्रशासनिक खर्च(कर्मचारी खर्च समेत) रकम | खुद नाफा/ नोक्सान रकम | सञ्चित नाफा/ नोक्सान रकम | डेब्ट इक्विटी अनुपात (प्रतिशत) |
|---|---|---|---|---|---|---|
| १ | साँस्कृतिक संस्थान | १६३.१४ | ४७९.५० | (१४८.६६) | (२८४२.२०) | (८७.९१) |
| २ | गोरखापत्र संस्थान | ७४७१.०४ | ३३४२.४९ | ६२४.४१ | ५७५.८५ | ०.०० |
| ३ | जनक शिक्षा सामग्री केन्द्र लि. | २६३१७.०६ | ८६२३.४८ | १९३६.५१ | (११९८७.३९) | २८.९० |
| ४ | नेपाल टेलिभिजन | ३६३९.०० | ६५९०.८३ | (३५१२.६७) | (२४०८९.६६) | २५.४९ |
| ५ | राष्ट्रिय आवास कम्पनी लि. | ९२९.२२ | ८०८.५९ | (१०४.९६) | (११८५.१९) | ०.०० |
| | जम्मा | ३८५१९.४६ | १९८४४.८९ | (१२०५.३६) | (३९५२८.६०) | ६.७० |

स्रोतः सम्बन्धित संस्थानबाट प्राप्त विवरण।

यस क्षेत्रमा रहेका संस्थानको आर्थिक वर्ष २०७८/७९ मा कुल प्रशासनिक खर्च रू.१ अर्ब ४३ करोड ८० लाख रहेकोमा आर्थिक वर्ष २०७९/८० मा ३८.०० प्रतिशतले वृद्धि भई रू.१ अर्ब ९८ करोड ४५ लाख पुगेको छ। जनक शिक्षा सामग्री केन्द्र लिमिटेड र नेपाल टेलिभिजनको प्रशासनिक खर्चमा आर्थिक वर्ष २०७८/७९ को तुलनामा समीक्षा अवधिमा क्रमश: ४०.२४ प्रतिशत र ४५.८८ प्रतिशतले वृद्धि भएको हुँदा समग्रमा यस क्षेत्रका संस्थानको प्रशासनिक खर्चमा वृद्धि देखिएको हो। त्यस्तै, आर्थिक वर्ष २०७८/७९ मा यस क्षेत्रको समग्र खुद नाफा रू.५ करोड ८४ लाख रहेकोमा समीक्षा अवधिमा खुद नोक्सानी रू.१२ करोड ५ लाख रहेको छ। आर्थिक वर्ष २०७८/७९ मा नाफामा रहेको गोरखापत्र संस्थान समीक्षा अवधिमा पनि रू.६ करोड २४ लाख नाफामा रहेको छ भने जनक शिक्षा सामग्री केन्द्र लिमिटेडको नाफामा कमी आई रू.१९ करोड ३६ लाख रहेको छ। नेपाल टेलिभिजनको नोक्सानीमा १७५.४० प्रतिशत ले वृद्धि भई रू.३५ करोड १३ लाख नोक्सानी कायम भएको हुँदा यस क्षेत्रको समग्र नोक्सानीमा वृद्धि भएको हो। यस क्षेत्रका संस्थानको कुल सञ्चित नोक्सानी आ.व. २०७८/७९ मा रू.४ अर्ब २ लाख भएकोमा आ.व. २०७९/८० मा १.१८ प्रतिशतले नोक्सानी कमी भई रू.३ अर्ब ९५ करोड २९ लाख पुगेको छ। समीक्षा अवधिसम्ममा यस क्षेत्रका गोरखापत्र संस्थान बाहेक सबै संस्थान सञ्चित नोक्सानीमा रहेका छन्।

सामाजिक क्षेत्रका संस्थानको औषत डेब्ट इक्विटी अनुपात ६.७० प्रतिशत रहेको छ। यस क्षेत्रका संस्थानको शेयरधनी कोष आर्थिक वर्ष २०७८/७९ मा रू.८ अर्ब १९ करोड ३४ लाख रहेकोमा आर्थिक वर्ष २०७९/८० मा ९.०३ प्रतिशतले वृद्धि भई रू.८ अर्ब ९३ करोड ३० लाख पुगेको छ।

सामाजिक क्षेत्रका संस्थानमा आर्थिक वर्ष २०७८/७९ मा १ हजार ५ सय ८२ जना कर्मचारी कार्यरत रहेकोमा आर्थिक वर्ष २०७९/८० मा १०.९९ प्रतिशतले कमी भई कर्मचारी संख्या १

हजार ४ सय ८ जना रहेको छ। सञ्चालन आयमा प्रति कर्मचारी उत्पादकत्व वृद्धि भई रू.२७ लाख ३५ हजार कायम भएको देखिन्छ।

सार्वजनिक ऋण व्यवस्थापन कार्यालयको अभिलेखअनुसार यस क्षेत्रका संस्थानले आर्थिक वर्ष २०७८/७९ सम्म नेपाल सरकारलाई तिर्न बाँकी ऋण रू.२ अर्ब ७५ लाख रहेकोमा आर्थिक वर्ष २०७९/८० मा २.५८ प्रतिशतले कमी भई रू.१ अर्ब ९५ करोड ५८ लाख रहेको छ। जनक शिक्षा सामग्री केन्द्र लिमिटेडको रू.५ करोड १७ लाख ऋण घटेको अवस्था छ। आर्थिक वर्ष २०७८/७९ सम्म यस क्षेत्रका संस्थानमा नेपाल सरकारको शेयर लगानी रू.४ अर्ब २८ करोड ४३ लाख रहेकोमा समीक्षा अवधिमा ३.४७ प्रतिशतले वृद्धि भई रू. ४ अर्ब ४३ करोड ३० लाख पुगेको छ। समीक्षा अवधिमा नेपाल टेलिभिजनमा रू.१४ करोड ८७ लाख रकमको शेयर थप भएको छ। आर्थिक वर्ष २०७८/७९ सम्म कोषमा व्यवस्था नभएको तथा सम्भावित दायित्व रू.१ अर्व ३८ करोड ३१ लाख रहेकोमा आर्थिक वर्ष २०७९/८० मा ११२.८९ प्रतिशतले वृद्धि भई रू.२ अर्व ९४ करोड ४५ लाख पुगेको छ।

## २.५ जनोपयोगी क्षेत्र

जनोपयोगी क्षेत्रमा पाँच संस्थानको आर्थिक वर्ष २०७८/७९ मा रू.१ खर्ब २५ अर्ब ६८ करोड ८७ लाख कुल सञ्चालन आय रहेकोमा आर्थिक वर्ष २०७९/८० मा ९.२३ प्रतिशतले वृद्धि भई रू.१ खर्ब ३७ अर्ब २९ करोड १० लाख पुगेको छ। आर्थिक वर्ष २०७८/७९ को तुलनामा आर्थिक वर्ष २०७९/८० मा नेपाल खानेपानी संस्थान र नेपाल विद्युत प्राधिकरणको सञ्चालन आयमा क्रमश: ९.७४ र १५.१३ प्रतिशतले वृद्धि भएको छ भने नेपाल दुरसञ्चार कम्पनी लिमिटेडको आयमा ४.३५ प्रतिशतले कमी आएको छ। विद्युत उत्पादन कम्पनी लिमिटेड र राष्ट्रिय प्रशारण ग्रिड कम्पनी लिमिटेडले सञ्चालन आय आर्जन गर्न सकेका छैनन्।

**तालिका २.५ आर्थिक वर्ष २०७९/८० मा जनोपयोगी क्षेत्रका सार्वजनिक संस्थानको वित्तीय स्थिति**

रकम (रू. लाखमा)

| क्र. सं. | संस्थान | सञ्चालन आय | प्रशासनिक खर्च(कर्मचारी खर्च समेत) रकम | खुद नाफा/ नोक्सान | सञ्चित नाफा/ नोक्सान | डेब्ट इक्विटी अनुपात (प्रतिशत) |
|---|---|---|---|---|---|---|
| १ | नेपाल खानेपानी संस्थान | ६७३९.३६ | ४२३२.७४ | (५४६९.१९) | (३०३७०.५३) | (४९५.२५) |
| २ | नेपाल विद्युत प्राधिकरण | १००३४५५.९५ | ६५६६७.३३ | ९४०५५.८२ | ३३६४२३.७० | ८९.५६ |
| ३ | नेपाल दूरसञ्चार कम्पनी लि. | ३६२७१४.५० | ८६३९६.१९ | ७९२०१.५५ | ४२६४६४.७४ | ०.०० |
| ४ | विद्युत उत्पादन कम्पनी लि. | ०.०० | ३४४.९२ | १३६१.१७ | ४००४.१७ | ०.०० |
| ५ | राष्ट्रिय प्रशारण ग्रिड कम्पनी | ०.०० | २६६.३३ | १८९१.४८ | ७९२५.७० | ०.०० |
| | **जम्मा** | १३७२९०९.८१ | १५६९०७.५१ | १७१०४०.८२ | ७४४,४४७.७८ | (८१.१३) |

**स्रोतः सम्बन्धित संस्थानबाट प्राप्त विवरण।**

आर्थिक वर्ष २०७८/७९ मा यस क्षेत्रका संस्थानको कुल प्रशासनिक खर्च रू. १२ अर्ब ७९ करोड ४९ लाख रहेकोमा आर्थिक वर्ष २०७९/८० मा २२.६३ प्रतिशतले वृद्धि भई रू. १५ अर्ब ६९ करोड ८ लाख पुगेको छ। त्यस्तै, आर्थिक वर्ष २०७८/७९ मा यस क्षेत्रको खुद नाफा रू.२१ अर्ब ७० करोड ८३ लाख रहेकोमा समीक्षा अवधिमा २१.२१ प्रतिशतले कमी भई रू.१७ अर्ब १० करोड ४१ लाख रहेको छ। यस क्षेत्रमा नेपाल खानेपानी संस्थान बाहेक सबै संस्थान खुद नाफामा भएतापनि गत आर्थिक वर्षको तुलनामा नेपाल विद्युत प्राधिकरण र नेपाल दुरसञ्चार कम्पनीको नाफामा कमी आएको कारण यस क्षेत्रको समग्र खुद नाफामा केही कमी आएको छ। आ.व. २०७८/७९ मा कुल सञ्चित नाफा रू.६८ अर्ब ६१ करोड ८९ लाख रहेकोमा आ.व.२०७९/८० मा ८.४९ प्रतिशतले वृद्धि भई रू.७४ अर्ब ४४ करोड ४८ लाख पुगेको छ।

जनोपयोगी क्षेत्रका संस्थानमा आर्थिक वर्ष २०७८/७९ मा १३ हजार १ सय ३० जना कर्मचारी कार्यरत रहेकोमा आर्थिक वर्ष २०७९/८० मा १.८८ प्रतिशतले वृद्धि भई १३ हजार ३ सय ७७ पुगेको छ। सञ्चालन आयमा प्रति कर्मचारी उत्पादकत्व वृद्धि भई रू.१ करोड २ लाख ६३ हजार कायम भएको देखिन्छ।

जनोपयोगी क्षेत्रका संस्थानको औसत डेब्ट इक्विटी अनुपात (८१.१३) प्रतिशत रहेको छ। यस क्षेत्रका संस्थानको शेयरधनीकोष आर्थिक वर्ष २०७८/७९ मा रू.३ खर्ब ९ अर्ब १६ करोड ६३ लाख रहेकोमा यो रकम आर्थिक वर्ष २०७९/८० मा १०.८५ प्रतिशतले वृद्धि भई रू.३ खर्ब ४२ अर्ब ७० करोड ४१ लाख पुगेको छ। यस क्षेत्रका संस्थानमध्ये नेपाल खानेपानी संस्थानको शेयरधनीकोष रू.२ अर्ब ५४ करोड ३ लाखले ऋणात्मक रहेको छ।

सार्वजनिक ऋण व्यवस्थापन कार्यालयको अभिलेखअनुसार यस क्षेत्रका संस्थानले आर्थिक वर्ष २०७८/७९ सम्म नेपाल सरकारलाई तिर्न बाँकी ऋण रू.२ खर्ब ४१ अर्ब ४ करोड ९७ लाख रहेकोमा आर्थिक वर्ष २०७९/८० मा ७.१७ प्रतिशतले वृद्धि भई रू.२ खर्ब ५८ अर्ब ३३ करोड १४ लाख पुगेको छ। आ.व. २०७९/८० मा नेपाल विद्युत प्राधिकरणमा रू.१८ अर्ब ५२ करोड ६० लाख थप ऋण लगानी भएको छ। आर्थिक वर्ष २०७८/७९ सम्ममा यस क्षेत्रका संस्थानमा नेपाल सरकारको शेयर लगानी रू.१ खर्ब ८३ अर्ब ४१ करोड ८ लाख रहेकोमा समीक्षा अवधिको अन्त्यसम्ममा यस क्षेत्रका संस्थानमा नेपाल सरकारको शेयर लगानी ८.४४ प्रतिशतले वृद्धि भई रू.१ खर्ब ९८ अर्ब ८९ करोड ४१ लाख पुगेको छ। आ.व. २०७९/८० मा नेपाल सरकारबाट नेपाल विद्युत प्राधिकरण, नेपाल दुरसञ्चार कम्पनी लिमिटेडमा क्रमश: रू.१२ अर्ब ७३ करोड ८६ लाख, रू.२ अर्ब ७४ करोड ४९ लाख रकमको थप शेयर लगानी भएको छ।

समीक्षा अवधिमा नेपाल सरकारले यस क्षेत्रका संस्थानबाट रू.६ अर्ब ५८ करोड ७७ लाख लाभांश प्राप्त गरेको छ र यो लाभांश रकम नेपाल दूरसञ्चार कम्पनी लिमिटेडबाट मात्र प्राप्त भएको हो। आर्थिक वर्ष २०७८/७९ सम्म कोषमा व्यवस्था नभएको तथा सम्भावित दायित्व रू.८५ अर्ब ३१

करोड ७० लाख रहेकोमा आर्थिक वर्ष २०७९/८० मा ३६.६० प्रतिशतले वृद्धि भई रू.१ खर्ब १६ अर्ब ५४ करोड ४९ लाख पुगेको छ। आ.व. २०७८/७९ मा नेपाल विद्युत प्राधिकरणको यस प्रकारको दायित्व रू.८४ अर्ब १७ करोड ४१ लाख रहेकोमा आर्थिक वर्ष २०७९/८० मा ३२.३२ प्रतिशतले वृद्धि भई रू.१ खर्ब ११ अर्ब ३७ करोड ८४ लाख पुगेको छ। यस क्षेत्रका संस्थानको कुल दायित्वमध्ये नेपाल विद्युत प्राधिकरणको मात्र ९५.५७ प्रतिशत रहेको छ।

## २.६ वित्तीय क्षेत्र

वित्तीय क्षेत्रमा नौ संस्थानको कुल सञ्चालन आय आर्थिक वर्ष २०७८/७९ मा रू.६६ अर्ब ४० करोड ५० लाख रहेकोमा आर्थिक वर्ष २०७९/८० मा ३१.२७ प्रतिशतले वृद्धि भई रू.८७ अर्ब १७ करोड १७ लाख पुगेको छ। यस क्षेत्रमा सबैभन्दा बढी सञ्चालन आय राष्ट्रिय वाणिज्य बैंक लि. को रू.२७ अर्ब ७० करोड ७८ लाख रहेको छ।

**तालिका २.६ आर्थिक वर्ष २०७९/८० मा वित्तीय क्षेत्रका सार्वजनिक संस्थानको वित्तीय स्थिति**

रकम (रू. लाखमा)

| क्र. सं. | सार्वजनिक संस्थान | सञ्चालन आय रकम | प्रशासनिक खर्च(कर्मचारी खर्च समेत) रकम | खुद नाफा/नोक्सान रकम | सञ्चित नाफा/ नोक्सान रकम | डेब्ट इक्विटी अनुपात (प्रतिशत) |
|---|---|---|---|---|---|---|
| १ | कृषि विकास बैङ्क लि. | २५३२०५.४४ | ४२०५१.३० | १३२३४.११ | १२४३१.६९ | ६६.९१ |
| २ | राष्ट्रिय बिमा संस्थान (जीवन) | ०.०० | २७०.२५ | १५.४९ | ९४०.७५ | ०.०० |
| ३ | राष्ट्रिय बिमा कम्पनी लि. | ५७७८.८६ | १९४९.१४ | ७७२५.४५ | ०.०० | ०.०० |
| ४ | राष्ट्रिय वाणिज्य बैङ्क लि. | २७७०७८.१४ | ४६६३७.२७ | ३५९५१.२८ | ९१८४.०७ | ५.०५ |
| ५ | निक्षेप तथा कर्जा सुरक्षण कोष | ३९९९३.०२ | ११३९.३६ | ३८०६३.७९ | ५२६०.८१ | ०.०० |
| ६ | नेपाल स्टक एक्सचेन्ज लिमिटेड | ८४१०.३१ | १४५०.२८ | ८१८६.८३ | १३४८७.७७ | ०.०० |
| ७ | नागरिक लगानी कोष | १३३०३.९३ | १६७५२.३८ | ३८५७०.२५ | ६२९०४.८१ | ०.०० |
| ८ | हाइड्रोइलेक्ट्रिसिटी इन्भेष्टमेण्ट एण्ड डेभलपमेण्ट कम्पनी लि. | ८४७७.९५ | ५६७.४८ | १३७५२.०७ | १४४४७.०९ | ०.०० |
| ९ | नेपाल बैङ्क लि. | २६५४६९.३९ | ४३५०४.५५ | ३४३७५.७९ | ३.९० | १०.२९ |
| | **जम्मा** | **८७१७१७.०३** | **१५४३२२.०१** | **१८९८७५.०६** | **११८६६०.९०** | **९.१३** |

**स्रोतः सम्बन्धित संस्थानबाट प्राप्त विवरण।**

यस क्षेत्रका संस्थानको आर्थिक वर्ष २०७८/७९ मा कुल प्रशासनिक खर्च रू.११ अर्ब ७१ करोड २५ लाख रहेकोमा आर्थिक वर्ष २०७९/८० मा ३१.७६ प्रतिशतले वृद्धि भई रू.१५ अर्ब ४३ करोड २२ लाख कायम भएको छ। त्यस्तै, आर्थिक वर्ष २०७८/७९ मा यस क्षेत्रको खुद नाफा

रू.१८ अर्ब १९ करोड ७४ लाख रहेकोमा समीक्षा अवधिमा खुद नाफामा ४.३४ प्रतिशतले वृद्धि भई रू.१८ अर्ब ९८ करोड ७५ लाख पुगेको छ। कुल सञ्चित नाफा आ.व. २०७८/७९ मा रू.२० अर्ब ८९ करोड १४ लाख रहेकोमा आ.व. २०७९/८० मा ४३.२० प्रतिशतले कमी आई रू. ११ अर्ब ८६ करोड ६१ लाख कायम भएको छ।

वित्तीय क्षेत्रका संस्थानमा आर्थिक वर्ष २०७८/७९ मा ८ हजार २ सय २० जना कर्मचारीहरू कार्यरत रहेकोमा आर्थिक वर्ष २०७९/८० मा १४.६० प्रतिशतले वृद्धि भई कर्मचारी संख्या ९ हजार ४ सय २० पुगेको छ। सञ्चालन आयमा प्रति कर्मचारी उत्पादकत्व घटी भई रू.९२ लाख ५३ हजार कायम भएको देखिन्छ।

वित्तीय क्षेत्रका संस्थानको औसत डेब्ट इक्विटी अनुपात ९.१३ प्रतिशत रहेको छ। यस क्षेत्रका संस्थानको शेयरधनी कोष आर्थिक वर्ष २०७८/७९ मा रू.१ खर्ब ८८ अर्ब ७१ करोड २७ लाख रहेकोमा यो रकम आर्थिक वर्ष २०७९/८० मा ७.१६ प्रतिशतले वृद्धि भई रू.२ खर्ब २ अर्ब २२ करोड ८६ लाख पुगेको छ।

सार्वजनिक ऋण व्यवस्थापन कार्यालयको अभिलेख अनुसार आर्थिक वर्ष २०७८/७९ सम्म यस क्षेत्रका संस्थानबाट नेपाल सरकारलाई तिर्न बाँकी ऋण रू.९ करोड ९ लाख रहेकोमा आर्थिक वर्ष २०७९/८० मा १.९४ प्रतिशतले कमी आई रू.८ करोड ९२ लाख रहेको देखिन्छ। आर्थिक वर्ष २०७८/७९ सम्ममा यस क्षेत्रका संस्थानमा नेपाल सरकारको शेयर लगानी रू.४८ अर्ब ५३ करोड ९९ लाख रहेकोमा समीक्षा अवधिको अन्त्यसम्ममा यस क्षेत्रका संस्थानमा नेपाल सरकारको शेयर लगानी १८.०७ प्रतिशतले वृद्धि भई रू.५७ अर्ब ३१ करोड १५ लाख पुगेको छ।

आ.व. २०७९/८० मा कृषि विकास बैंक, राष्ट्रिय वाणिज्य बैंक र हाइड्रोइलेक्ट्रीसिटी इन्भेष्टमेन्ट एण्ड डेभलपमेन्ट कम्पनी लिमिटेडमा क्रमशः ३ अर्ब २६ करोड ६५ लाख, ४ अर्ब ३ करोड ११ लाख र १ अर्ब ४७ करोड ४० लाख थप शेयर लगानी भएको छ। उल्लेखित संस्थानले आर्थिक वर्ष २०७९/८० मा हकप्रद शेयर र बोनस शेयर निष्काशन गरेको हुँदा कूल शेयर संख्या वृद्धि भएको देखिन्छ। यस क्षेत्रबाट नेपाल सरकारलाई रू.६ अर्ब ५६ करोड ५७ लाख लाभांश प्राप्त भएको छ। सो मध्ये कृषि विकास बैंकबाट रू.१ अर्ब ६ करोड ५८ लाख, राष्ट्रिय वाणिज्य बैंकबाट रू.१ अर्ब ४ करोड ५२ लाख, नेपाल स्टक एक्स्चेन्ज लिमिटेडबाट रू. ५८ करोड ६६ लाख हाइड्रोइलेक्ट्रिसिटी इन्भेष्टमेण्ट एण्ड डेभलपमेण्ट कम्पनी लिमिटेडबाट रू. ३ अर्ब १२ करोड १३ लाख र नेपाल बैंक लिमिटेडबाट रू.७३ करोड ४७ लाख प्राप्त भएको छ।
आर्थिक वर्ष २०७८/७९ सम्म कोषमा व्यवस्था नभएको तथा सम्भावित दायित्व रू.११ खर्ब ९० अर्ब ६१ करोड ५६ लाख रहेकोमा आर्थिक वर्ष २०७९/८० मा ४४.४९ प्रतिशतले वृद्धि भई रू. १७ खर्ब २० अर्ब ३६ करोड ४४ लाख पुगेको छ। आर्थिक वर्ष २०७८/७९ मा निक्षेप तथा कर्जा

सुरक्षण कोषको कोषमा व्यवस्था नभएको तथा सम्भावित दायित्व रू.९ खर्ब ८३ अर्ब ४७ करोड ७४ लाख रहेकोमा समीक्षा अवधिमा वृद्धि भई रू.१५ खर्ब ६ अर्ब ७९ करोड ७० लाख हुन पुगेको छ। कृषि विकास बैंक लिमिटेडको कोषमा व्यवस्था नभएको तथा सम्भावित दायित्व आर्थिक वर्ष २०७८/७९ मा रू. १ खर्ब ९ अर्ब १३ करोड २७ लाख रहेकोमा समीक्षा अवधिमा वृद्धि भई रू.१ खर्ब २२ अर्ब ५ करोड २९ लाख पुगेको छ। यस क्षेत्रको कोषमा ब्यवस्था नभएको तथा सम्भावित दायित्वमध्ये ८७.५८ प्रतिशत निक्षेप तथा कर्जा सुरक्षण कोषको मात्र रहेको छ। निक्षेप सुरक्षणको दायरा विस्तार भएको एवंम् निक्षेप सुरक्षण वापतको सम्पुर्ण दायित्वलाई सम्भावित दायित्वमा गणना गरिएकोले यस्तो दायित्वको वृद्धि उच्च देखिएको छ।

## २.७ विकास समिति

विकास समिति ऐन, २०१३ अन्तर्गत स्थापित विभिन्न विकास समितिले स्वायत्त संस्थाको रूपमा कार्य सञ्चानल गर्दै आएका छन्। विकास समितिहरूले आफ्नो उद्देश्य तथा कार्य प्रकृतिको आधारमा विभिन्न विषयगत मन्त्रालयसँग आवद्ध भई आफ्ना क्रियाकलाप सञ्चालन गर्दछन्। हालसम्म सबै विकास समितिको एकीकृत विवरण सङ्कलन गर्न सकिएको छैन। सामान्यतया विकास समितिमा नेपाल सरकारको शेयर तथा ऋण लगानी नहुने हुँदा सरकारबाट उपलब्ध हुने अनुदान र आफ्नै आयस्रोतबाट यस्ता समितिहरू सञ्चालित छन्। विकास समितिले संस्थागत सुशासन र वित्तीय पारदर्शिता पूरा गर्न वित्तीय प्रतिवेदन सार्वजनिक गर्नुपर्ने मान्यताअनुरूप यस मन्त्रालयमा उपलब्ध भएका विवरणलाई प्रस्तुत समीक्षाको खण्ड ८ मा समावेश गरिएको छ।

*(**नोटः** अन्तिम लेखा परीक्षण भइसकेका सार्वजनिक संस्थानको अङ्क मिलान हुन गएको कारणले सञ्चालन आय, प्रशासनिक खर्च, खुद नाफा/नोक्सान, सञ्चित नाफा/नोक्सान, शेयरधनी कोष र कोषमा व्यवस्था नगरिएको दायित्व शीर्षकको आर्थिक वर्ष २०७८/७९ को रकम सार्वजनिक संस्थानको वार्षिक स्थिति समीक्षा २०८० र यस समीक्षा पुस्तकमा हेरफेर हुनगएको छ। वित्तीय विवरण तयार भई नसकेका सार्वजनिक संस्थानको विवरण सम्बन्धित संस्थानले उपलब्ध गराएको विवरणअनुसार तयार भएकोले अन्तिम लेखा परीक्षणपछि तयार हुने वित्तीय विवरणमा अङ्क मिलान लगायतका कारणले तथ्याङ्कमा केही फरक हुन सक्नेछ।)*

# खण्ड तीन
# सार्वजनिक संस्थानको वित्तीय विश्लेषण

यस खण्डमा नेपाल सरकारले सार्वजनिक संस्थानमा गरेको शेयर तथा ऋण लगानी र समग्र वित्तीय अवस्थाका सम्बन्धमा विस्तृत विवरण प्रस्तुत गरिएको छ। यसमा सार्वजनिक संस्थानको सञ्चालन आय, प्रशासनिक खर्च, खुद नाफा/नोक्सान र सञ्चित नाफा/नोक्सानको अवस्था, नेपाल सरकारले प्राप्त गरेको लाभांश, शेयरधनी कोष, कोषमा व्यवस्था नगरिएको दायित्व, कार्यरत जनशक्ति, लेखा परीक्षणको अवस्था र आर्थिक वर्ष २०७९/८० मा उच्च नाफा आर्जन गर्ने तथा अत्यधिक नोक्सानी भएका सार्वजनिक संस्थानको सम्बन्धमा विश्लेषण गरिएको छ।

## ३.१ नेपाल सरकारले सार्वजनिक संस्थानमा गरेको लगानी

जलविद्युत उत्पादन तथा प्रसारण, विमानस्थल निर्माण, दूरसञ्चार र खानेपानी आयोजना सञ्चालन लगायतका ठूला पूर्वाधार सञ्चालन गर्ने क्रममा सार्वजनिक संस्थानमा शेयर र ऋण लगानी निरन्तर बढ्दै गएको छ। हाल सञ्चालनमा नरहेका सार्वजनिक संस्थानको सम्पत्ति सुरक्षाका लागि केही सुरक्षाकर्मी र कर्मचारी राख्नुपर्दा प्रशासनिक खर्चका लागि समेत नेपाल सरकारबाट लगानी गर्नुपर्ने भएकोले पनि शेयर तथा ऋण लगानीमा वृद्धि हुँदै गएको छ। यस्तो लगानी आर्थिक वर्ष २०७८/७९ सम्म रू. ६ खर्ब १८ अर्ब १६ करोड ४६ लाख रहेकोमा आर्थिक वर्ष २०७९/८० मा ७.५७ प्रतिशतले वृद्धि भई रू. ६ खर्ब ६४ अर्ब ९४ करोड ११ लाख पुगेको छ। यसमा शेयरको अंश ५३.५९ प्रतिशत (रू. ३ खर्ब ५६ अर्ब ४० करोड ४८ लाख) तथा ऋणको अंश ४६.४१ प्रतिशत (रू. ३ खर्ब ८ अर्ब ५३ करोड ६४ लाख) रहेको छ।

आर्थिक वर्ष २०७८/७९ को तुलनामा नेपाल विद्युत् प्राधिकरण, नेपाल नागरिक उड्डयन प्राधिकरण, नेपाल रेल्वे कम्पनी लि. को शेयर र ऋण, हाइड्रोइलेक्ट्रिसिटी एण्ड डेभलपमेन्ट कम्पनी लिमिटेड र जडिबुटी उत्पादन तथा प्रशोधन कम्पनी लिमिटेडको शेयर र खानेपानी संस्थानको ऋण रकममा वृद्धि भएका कारण कूल शेयर तथा ऋण रकममा वृद्धि भएको हो। नागरिक उड्डयन प्राधिकरणलाई विमानस्थल निर्माण, हवाई यातायात क्षमता अभिवृद्धि आयोजना र दोश्रो अन्तर्राष्ट्रिय विमानस्थल निर्माण आयोजना समेतका लागि नेपाल सरकारबाट शेयर र ऋण लगानी भएको देखिन्छ भने नेपाल विद्युत प्राधिकरणको जलविद्युत् उत्पादन तथा प्रशारण पूर्वाधार निर्माणका लागि थप शेयर तथा ऋण लगानी भएको छ।

**तालिका ३.१ विगत पाँच आर्थिक वर्षमा कुल लगानी (शेयर र ऋण) को अवस्था**

रकम (रू. लाखमा)

| विवरण | आर्थिक वर्ष | | | | |
|---|---|---|---|---|---|
| | २०७५/७६ | २०७६/७७ | २०७७/७८ | २०७८/७९ | २०७९/८० |
| औद्योगिक | १४२४५३ | १४६२२२ | १४६२२२ | १४७७२२ | १४८,३९४ |

| | | | | | |
|---|---|---|---|---|---|
| व्यापारिक | १३३२२३ | १३५०७० | १३५०७० | २०५०७० | १६३,९५५ |
| सेवा | ८५८२८८ | ९३८६५१ | ९३८६५१ | १०३५०२२ | ११२६९१२ |
| सामाजिक | ५६८१९ | ५७७९८ | ५८३१८ | ६२९१८ | ६३,८८८ |
| जनोपयोगी | ३५४८६०१ | ३९२२७०६ | ३९२२७०६ | ४२४४६०५ | ४,५७२,२५५ |
| वित्तीय | ४५६१०९ | ४७१९२० | ४७१९२० | ४८६३०९ | ५७४,००७ |
| **कुल जम्मा** | **४६४५९३१** | **५१९५४९३** | **५६७२८८६** | **६१८१६४६** | ६६४९४११ |
| **वार्षिक वृद्धि (%)** | **२७.३६** | **११.७४** | **९.१८** | **८.९७** | **७.५७%** |
| | **पाँच वर्षको औसत वृद्धि (%)** | | | | १२.९६ |
| **शेयर लगानी** | २७१८३९९ | २८८६५८५ | ३१४६५०७ | ३२८९२७५ | ३,५६४०४८ |
| **ऋण लगानी** | १९२७५३२ | २३०८९०८ | २५२६३७९ | २८९२३७१ | ३,०८५,३६४ |
| **शेयर लगानी वृद्धि** | ३५.६७ | ६.१९ | ९.०० | ४.५४ | ८.३५ |
| **ऋण लगानी वृद्धि** | १७.२३ | १९.७९ | ९.४२ | १४.४९ | ६.६७ |
| | **औसत शेयर लगानी वृद्धि** | | | | **१२.७५** |
| | **औसत ऋण लगानी वृद्धि** | | | | **१३.५२** |

**स्रोतः सार्वजनिक ऋण व्यवस्थापन कार्यालय।**

सार्वजनिक संस्थानमा आर्थिक वर्ष २०७५/७६ मा शेयर लगानी रू. २ खर्ब ७१ अर्ब ८३ करोड ९९ लाख रहेकोमा पाँच वर्षको अवधिमा औसत १२.७५ प्रतिशतले वृद्धि भई आर्थिक वर्ष २०७९/८० मा रू. ३ खर्ब ५६ अर्ब ४० करोड ४८ लाख पुगेको छ। नेपाल सरकारले सार्वजनिक संस्थानमा गरेको कुल शेयर लगानीमा नेपाल विद्युत प्राधिकरणको ४९.०५ प्रतिशत, नेपाल नागरिक उड्डयन प्राधिकरणको १७.६० प्रतिशत र नेपाल दूरसञ्चार कम्पनी लि. ४.६२ प्रतिशत गरी यी तीन संस्थानमा मात्र ७१.२७ प्रतिशत शेयर लगानी रहेको छ। यी संस्थानमा गरिएको लगानी ठूला पूर्वाधार निर्माण जस्तै- जलविद्युत आयोजना, प्रसारण लाइन निर्माण, पोखरा विमानस्थल निर्माण, भैरहवा विमानस्थल निर्माण, त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थलको क्षमता अभिवृद्धी आयोजना र दूरसञ्चार क्षेत्रको नवीनतम् प्रविधि भित्र्याउने कार्यमा केन्द्रित रहेको देखिन्छ।

समीक्षा अवधिमा नेपाल सरकारले सार्वजनिक संस्थानमा गरेको ऋण लगानी वार्षिक औसत १३.५२ प्रतिशतले वृद्धि भई आर्थिक वर्ष २०७९/८० मा रू. ३ खर्ब ८ अर्ब ५३ करोड ६४ लाख पुगेको देखिन्छ। कुल ऋण लगानीमध्ये नेपाल विद्युत प्राधिकरणमा रू. २ खर्ब ४१ अर्ब ५४ करोड ९५ लाख (७८.२९ प्रतिशत), नेपाल नागरिक उड्डयन प्राधिकरणमा रू.३२ अर्ब १ करोड ७८ लाख (१०.३८ प्रतिशत) र नेपाल खानेपानी संस्थानमा रू.१६ अर्ब ७८ करोड १९ लाख (५.४४ प्रतिशत) रहेको छ। कूल ऋण लगानीमा यी तीनवटा संस्थानमा गरिएको ऋण लगानीको अंश ९४.११ प्रतिशत रहेको छ।

## ३.२ सञ्चालन आय

सार्वजनिक संस्थानबाट उत्पादित वस्तु तथा सेवा बिक्रीबाट प्राप्त हुने रकमलाई सञ्चालन आयमा गणना गरिन्छ। यस्तो सञ्चालन आय आर्थिक वर्ष २०७८/७९ मा रू. ५ खर्ब ७५ अर्ब ४३ करोड ५५ लाख रहेकोमा आर्थिक वर्ष २०७९/८० मा १४.८७ प्रतिशतले वृद्धि भई रू. ६ खर्ब ६१ अर्ब १ करोड २९ लाख पुगेको छ।

**तालिका ३.२ विगत पाँच आर्थिक वर्षमा सञ्चालन आयको अवस्था**

रकम (रू. लाखमा)

| क्षेत्र | आर्थिक वर्ष | | | | |
|---|---|---|---|---|---|
| | २०७५/७६ | २०७६/७७ | २०७७/७८ | २०७८/७९ | २०७९/८० |
| औद्योगिक | ७४२४४ | ६०५३६ | ६३४४५ | ६४२३१ | ५०१८२ |
| व्यापारिक | २५९९९२० | २१९८४४९ | २४०७३७६ | ३४८४३८४ | ३८९८०८९ |
| सेवा | २६०३६२ | २२७३७७ | १४५६१८ | २५२९५७ | ३७८७११ |
| सामाजिक | २२४०८ | २५०९५ | २८१२० | ३१८४७ | ३८५१९ |
| जनोपयोगी | १०४०८९२ | १०३६६०० | १०७४०८६ | १२५६८८७ | १३७२९१० |
| वित्तीय | ७१४६१९ | ७३९०७८ | ५०५७७३ | ६६४०५० | ८७१७१७ |
| कुल जम्मा | ४७१२४४६ | ४२८७१३४ | ४२२४४१७ | ५७५४३५५ | ६६१०१२९ |
| वार्षिक वृद्धि/ह्रास (%) | २०.५८ | (९.०३) | (१.४६) | ३६.२२ | १४.८७ |
| पाँच वर्षको औसत वृद्धि (%) | | | | | ९.२९ |

स्रोतः सम्बन्धित संस्थानबाट प्राप्त विवरण।

आ.व.२०७८/७९ को तुलनामा आ.व.२०७९/८० मा औद्योगिक क्षेत्र बाहेक अन्य सबै क्षेत्रको सञ्चालन आयमा वृद्धि भएको छ। सबैभन्दा बढी सेवा क्षेत्रको सञ्चालन आय ४९.७१ प्रतिशतले वृद्धि भएको छ। विगत पाँच वर्षको तथ्याङ्क हेर्दा औषत ९.२९ प्रतिशतले सञ्चालन आयमा वृद्धि भएको छ। समीक्षा अवधिमा उदयपुर सिमेन्ट कम्पनी लि. को सञ्चालन आय ५२.९३ प्रतिशतले घटेको छ।

आर्थिक वर्ष २०७९/८० मा सञ्चालन आयमा सबैभन्दा बढी योगदान व्यापारिक क्षेत्रको रहेको छ भने जनोपयोगी र वित्तीय क्षेत्र क्रमशः दोस्रो र तेस्रो स्थानमा रहेका छन्। आर्थिक वर्ष २०७९/८० मा सञ्चालन आय बढी भएका तीन सार्वजनिक संस्थानमा क्रमश: नेपाल आयल निगम (रू. ३ खर्ब ८२ अर्ब ४९ करोड २४ लाख), नेपाल विद्युत प्राधिकरण (रू. १ खर्ब ३४ करोड ५६ लाख) र नेपाल दूरसञ्चार कम्पनी लिमिटेड (रू. ३६ अर्ब २७ करोड १५ लाख) रहेका छन्। यी तीनवटा संस्थानको संचालन आय कुल सञ्चालन आयको ६३.५५ प्रतिशत रहेको छ।

## ३.३ प्रशासनिक खर्च

सार्वजनिक संस्थानको दैनिक प्रशासनिक कार्य संचालन गर्न र कर्मचारीको तलबभत्ता सुविधा प्रदान गर्न गरिने खर्चलाई प्रशासनिक खर्चमा गणना गरिन्छ। यस्तो खर्च आर्थिक वर्ष २०७८/७९ मा रू. ३५ अर्ब ४६ करोड ४७ लाख रहेकोमा आर्थिक वर्ष २०७९/८० मा २३.७९ प्रतिशतले वृद्धि भई

रू. ४३ अर्ब ९०करोड १८ लाख रहेको छ। प्रशासनिक खर्चको विगत पाँच वर्षको औषत वृद्धि १५.६६ प्रतिशत रहेको छ।

### तालिका ३.३ विगत पाँच आर्थिक वर्षको प्रशासनिक खर्चको अवस्था

रकम (रू. लाखमा)

| क्षेत्र | आर्थिक वर्ष | | | | |
|---|---|---|---|---|---|
| | २०७५/७६ | २०७६/७७ | २०७७/७८ | २०७८/७९ | २०७९/८० |
| औद्योगिक | ८७३१ | ९१४३ | ६५४१ | ७०२८ | ७३७५ |
| व्यापारिक | १८०५८ | २५७०४ | २३३१६ | २४४६१ | २५७७१ |
| सेवा | ५११२५ | ५१८४६ | ५७४६३ | ६३७०४ | ७४८५९ |
| सामाजिक | ११६०१ | १३११६ | १६८५६ | १४३८० | २०१०३ |
| जनोपयोगी | ११९८२४ | १३२५९० | १३७९६० | १२७९४९ | १५६९०८ |
| वित्तीय | १०६७१९ | १२३७२० | १२१२७७ | ११७१२५ | १५४३२२ |
| कुल जम्मा | ३१६०५८ | ३५६११९ | ३६३४१३ | ३५४६४७ | ४३९०१८ |
| वार्षिक वृद्धि/ह्रास (%) | ४२.२० | १२.६८ | २.०५ | (२.४१) | २३.७९ |
| पाँच आर्थिक वर्षको औषत वृद्धि | | | | | १५.६६ |

स्रोतः सम्बन्धित संस्थानबाट प्राप्त विवरण।

प्रशासनिक खर्चको क्षेत्रगत विश्लेषण गर्दा आ.व.२०७९/८० मा जनउपयोगी क्षेत्रको खर्च सबैभन्दा बढी ३५.७४ प्रतिशत रहेको छ भने औद्योगिक क्षेत्रको खर्च सबैभन्दा कम १.६७ प्रतिशत रहेको छ। यस्तो खर्च बढी रहेका तीन सार्वजनिक संस्थानमा क्रमशः नेपाल दूरसञ्चार कम्पनी लिमिटेड, नेपाल विद्युत प्राधिकरण र राष्ट्रिय वाणिज्य वैंक लिमिटेड रहेका छन्। यी तीन संस्थानको प्रशासनिक खर्च समग्र संस्थानको प्रशासनिक खर्चको ४५.२६ प्रतिशत रहेको छ।

## ३.४ खुद नाफा/नोक्सान

सार्वजनिक संस्थानको एक आर्थिक वर्षको समग्र आयबाट समग्र खर्च घटाई हुन आउने रकमलाई खुद नाफा/नोक्सानमा गणना गर्ने गरिएको छ। यस्तो खुद नाफा आर्थिक वर्ष २०७९/८० मा रू.४८ अर्ब ५१ करोड ७५ लाख रहेको छ। सार्वजनिक संस्थानको वित्तीय विवरण अनुसार समीक्षा अवधिमा २६ वटा संस्थान खुद नाफामा रहेका छन्।

आ.व.२०७९/८० मा व्यापारिक, सेवा, जनोपयोगी र वित्तीय क्षेत्रका सार्वजनिक संस्थान खुद नाफामा सञ्चालित छन् भने औद्योगिक र सामाजिक क्षेत्रका संस्थान खुद नोक्सानीमा रहेका छन्। आ.व.२०७८/७९ को तुलनामा संस्थानको कुल नाफा ३०४६.४० प्रतिशतले वृद्धि भएको देखिन्छ। यसरी उच्च वृद्धि हुनुमा नेपाल आयल निगम आ.व.२०७८/७९ मा ३८ अर्ब १७ करोड ७८ लाख घाटा रहेकोमा आ.व.२०७९/८० मा ११ अर्ब ७२ करोड ३० लाख नाफामा रहेको कारणले हो।

### तालिका ३.४ विगत पाँच आर्थिक वर्षको खुद नाफा/नोक्सान तथा सञ्चित नाफा/नोक्सानको विवरण

रकम (रू.लाखमा)

| क्षेत्र | आर्थिक वर्ष | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|---|
| | २०७५/७६ | | २०७६/७७ | | २०७७/७८ | | २०७८/७९ | | २०७९/८० | |
| | खुद नाफा/ नोक्सान | सञ्चित नाफा/ नोक्सान | खुद नाफा/ नोक्सान | सञ्चित नाफा/ नोक्सान | खुद नाफा/ नोक्सान | सञ्चित नाफा/ नोक्सान | खुद नाफा/ नोक्सान | सञ्चित नाफा/ नोक्सान | खुद नाफा/ नोक्सान | सञ्चित नाफा/ नोक्सान |
| औद्योगिक | (३९३७) | (१६२५०५) | (९१४७) | (१७४९५६) | (९४९६) | (१८०२६३) | (७६९४) | (१८९५८२) | (१४८५१) | (२०६०६६) |
| व्यापारिक | ९०८७१ | १२१०६५ | १२९९३१ | २१४७९१ | (३७०९) | १९३८७० | (३७५९९५) | (१६८२३१) | ११८११४ | (३९२७९) |
| सेवा | २५८७३ | ११३३९७ | (८७७२) | ९११११६ | (२६१९१) | ५७८२७ | (५३०) | २६७९१ | २२२०१ | ३३२६१ |
| सामाजिक | (२१०१) | (३२५१८) | (३०२६) | (३५६४४) | (२२०४) | (३७६०३) | ५८३ | (४०००२) | (१२०५) | (३९५२९) |
| जनोपयोगी | १९६१६९ | ४११६२६ | २०६३०९ | ५०३६८७ | १३०५९० | ५५२५०३ | २१७०८३ | ६८६१८९ | १७१०४१ | ७४४४४८ |
| वित्तीय | १८२०४० | १३१९०८ | १६७६८७ | १५६१२५ | १७४७०३ | ३३७२८३ | १८१९७४ | २०८९१४ | १८९८७५ | ११८६६१ |
| कुल जम्मा | ४८८९१६ | ५८२९७२ | ४८२९८२ | ७५५११९ | २६३६९२ | ९२३६१६ | १५४२० | ५२४०७८ | ४८५१७५ | ६११४९६ |
| वार्षिक वृद्धि /ह्रास (%) | १२.५३ | ३७.७१ | (१.२१) | २९.५३ | (४५.४०) | २२.३१ | (९४.१५) | (४३.२६) | ३०४६.४० | १६.६८ |
| पाँच आर्थिक वर्षको खुद नाफा/नोक्सानको औषत वृद्धि | | | | | | | | | ५८३.६३ | |
| पाँच आर्थिक वर्षको सञ्चित नाफा/नोक्सानको औषत वृद्धि | | | | | | | | | १२.५९ | |

**स्रोतः सम्बन्धित संस्थानबाट प्राप्त विवरण।**

पछिल्लो आर्थिक वर्षमा समग्र कारोबारबाट भएको खुद नाफा/नोक्सान (कर र लाभांश पश्चात्) रकम अघिल्लो आर्थिक वर्षसम्मको नाफा/नोक्सान (समायोजन नगरेको) रकमसँग मिलान गरी हुन आउने रकमलाई सार्वजनिक संस्थानको सञ्चित नाफा/नोक्सानमा देखाउने गरिएको छ। यस्तो रकम आर्थिक वर्ष २०७८/७९ को तुलनामा१६.६८ प्रतिशतको वृद्धि भई २०७९/८० सम्ममा रू. ६१ अर्ब १४ करोड ९६ लाख पुगेको छ। समीक्षा अवधिमा सबैभन्दा बढी सञ्चित नाफा गर्ने ३ वटा संस्थानमा क्रमश नेपाल दुरसंचार कम्पनी लि., नेपाल विद्युत प्राधिकरण र नेपाल नागरिक उड्डयन प्राधिकरण रहेका छन्।

क्षेत्रगत रूपमा विश्लेषण गर्दा जनोपयोगी क्षेत्रमा रू. ७४ अर्ब ४४ करोड ४८ लाख, वित्तीय क्षेत्रमा रू. ११ अर्ब ८६ करोड ६१ लाख र सेवा क्षेत्रमा रू. ३ अर्ब ३२ करोड ६१ लाख सञ्चित नाफा रहेको छ भने औद्योगिक क्षेत्रमा रू. २० अर्ब ६० करोड ६६ लाख, व्यापारिक क्षेत्रमा रू. ३ अर्ब ९२ करोड ७९ लाख र सामाजिक क्षेत्रमा रू. ३ अर्ब ९५ करोड २९ लाख सञ्चित नोक्सान रहेको देखिन्छ।

## ३.५ नेपाल सरकारले प्राप्त गरेको लाभांश

नेपाल सरकारले गरेको शेयर लगानीको प्रतिफल स्वरूप सम्बन्धित सार्वजनिक संस्थानबाट लाभांश प्राप्त हुने गर्दछ। यस्तो लाभांश रकम आर्थिक वर्ष २०७५/७६ मा रू.९ अर्ब ४७ करोड ९ लाख रहेकोमा आर्थिक वर्ष २०७९/८० मा रू. १३ अर्ब ७५ करोड ६७ लाख प्राप्त भएको छ। विगत पाँच वर्षमा लाभांशको रकममा औषत १०.०० प्रतिशतले वृद्धि भएको देखिन्छ। कुल शेयर लगानीको

तुलनामा लाभांश अनुपात विश्लेषण गर्दा आर्थिक वर्ष २०७५/७६ मा ३.४८ प्रतिशत रहेकोमा २०७९/८० मा ३.९० प्रतिशत रहेको छ।

तालिका ३.५ विगत पाँच आर्थिक वर्षमा लाभांश प्रासिको विवरण

| | | | | | रकम (रू.लाखमा) |
|---|---|---|---|---|---|
| क्षेत्र | आर्थिक वर्ष | | | | |
| | २०७५/७६ | २०७६/७७ | २०७७/७८ | २०७८/७९ | २०७९/८० |
| औद्योगिक | - | - | - | - | ० |
| व्यापारिक | ५६०५ | ५१५४७ | १८८१ | - | ० |
| सेवा | ३८२३ | २५७४ | - | ५२३५ | ६०३३ |
| सामाजिक | - | - | - | - | ० |
| जनोपयोगी | ७५४८२ | ६१७७७ | ५४८९४ | २७४४९ | ६५८७७ |
| वित्तीय | ९७९९ | २५०९७ | १०४३५ | २८८६८ | ६५६५७ |
| कुल जम्मा | ९४७०९ | १४०९९५ | ६७२१० | ६१५५१ | १३७५६७ |
| लाभांश/शेयर को अनुपात | ३.४८ | ४.८८ | २.१३ | १.८७ | ३.९० |
| वार्षिक वृद्धि/ह्रास | (६१.६३) | ४८.८७ | (५२.३३) | (८.४२) | १२३.५० |
| पाँच आर्थिक वर्षको औसत वृद्धि | | | | | १०.०० |

स्रोतः सार्वजनिक ऋण व्यवस्थापन कार्यालय।

चित्र ४ शेयर लगानी र लाभांश अनुपात




स्रोतः तालिका ३.५ अनुसार।

आ.व.२०७९/८० मा जम्मा नौ वटा सार्वजनिक संस्थानबाट मात्र लाभांश प्राप्त भएको छ। यस आ.व.मा जनोपयोगी, सेवा र वित्तीय क्षेत्रबाट लाभांश प्राप्त भएको छ भने औद्योगिक, सामाजिक र व्यापारिक क्षेत्रबाट लाभांश प्राप्त भएको छैन। जनोपयोगी क्षेत्रको लाभांश कूल लाभांशको ४७.८८ प्रतिशत रहेको छ। उक्त लाभांश नेपाल दुरसञ्चार कम्पनी लिमिटेडको मात्र हो। त्यस्तै हाइड्रोइलेक्ट्रिसीटी इन्भेष्टमेन्ट एण्ड डेभलपमेन्ट कम्पनी लि. को २२.६८, कृषि विकास बैंक लि. को ७.७४ प्रतिशत र राष्ट्रिय वाणिज्य वैंक लि. को ७.५९ प्रतिशत लाभांश योगदान रहेको छ।

## ३.६ शेयरधनी कोष

सार्वजनिक संस्थानको सम्पत्ति र दायित्वको फरक शेयरधनी कोष अन्तर्गत देखाइएको छ जसले संस्थानको चालु वित्तीय अवस्थालाई प्रतिविम्बित गर्दछ। सार्वजनिक संस्थानको शेयरधनी कोष २०७९/८० सम्ममा रू. ९ खर्ब ८२ अर्ब १३ करोड १७ लाख पुगेको छ। समिक्षा अवधिमा ३२ वटा संस्थानको शेयरधनी कोष धनात्मक र बाँकी १० वटाको शेयरधनी कोष ऋणात्मक रहेको छ।

**तालिका ३.६ विगत पाँच आर्थिक वर्षको शेयरधनी कोष/नेटवर्थको अवस्था**

रकम (रू. लाखमा)

| क्षेत्र | आर्थिक वर्ष | | | | |
|---|---|---|---|---|---|
| | २०७५/७६ | २०७६/७७ | २०७७/७८ | २०७८/७९ | २०७९/८० |
| **औद्योगिक** | (९७३९१) | (८७३१६) | (३३३४१) | (४०९९९) | (५६,७३५) |
| **व्यापारिक** | ३६६०४८ | ३७०७५८ | ३५३३६० | ७७०६० | २०६३८६ |
| **सेवा** | २०९२६२७ | २४८४८८४ | २५२९३१४ | २५१६५४१ | ४१३३०१० |
| **सामाजिक** | ९१५५९ | ८१७६८ | ७९३४३ | ८१९३४ | ८९३३० |
| **जनोपयोगी** | २२९९३५२ | २५५२५२५ | २८९६१७२ | ३०९१६६३ | ३४२७०४१ |
| **वित्तीय** | १४५४३५१ | १६३६४१६ | १७३२४२७ | १८८७१२७ | २०२२२८६ |
| **कुल जम्मा** | **६२०६५४६** | **७०३९०३५** | **७५५७२७४** | **७६१३३२५** | **९८२१३१७** |
| **वार्षिक वृद्धि/ह्रास** | २१.७९ | १३.४१ | ७.३६ | ०.७४ | २९.०० |
| **पाँच आर्थिक वर्षको औषत वृद्धि** | | | | | १४.४६ |

**स्रोतः सम्बन्धित संस्थानबाट प्राप्त विवरण।**

शेयरधनी कोष ऋणात्मक रहेका १० वटा संस्थान मध्ये सबैभन्दा बढी ऋणात्मक शेयरधनी कोष नेपाल वायुसेवा निगमको रहेको छ। क्षेत्रगतरूपमा औद्योगिक क्षेत्रको शेयरधनीकोष ऋणात्मक रहेको छ भने अन्य क्षेत्रको धनात्मक रहेको छ। शेयरधनीकोष धनात्मक हुने तीन ठूला सार्वजनिक संस्थानमा नेपाल नागरिक उड्डयन प्राधिकरण (रू.३ खर्ब ६५ अर्ब ११ करोड ९१ लाख), नेपाल विद्युत प्राधिकरण (रू.२ खर्ब ४१ अर्ब ५१ करोड ६ लाख) तथा नेपाल दूरसञ्चार कम्पनी लि. (रू. ९३ अर्ब ९४ करोड ५० लाख) रहेका छन् र यी तीनको अंश ७१.३३ प्रतिशत हुन आउँछ। आ.व.२०७८/७९ को तुलनामा आ.व. २०७९/८० मा शेयरधनीकोष २९.०० प्रतिशतले वृद्धि भएको छ भने विगत पाँच वर्षको औषत वृद्धिदर १४.४६ प्रतिशत रहेको छ।

## ३.७ कोषमा व्यवस्था नगरिएको दायित्व

प्रचलित कानुनअनुसार दीर्घकालमा तिर्नुपर्ने दायित्व सिर्जना भएको तर सो दायित्व फरफारकका लागि सार्वजनिक संस्थानले रकमको व्यवस्था नगरेको दायित्वलाई कोषमा व्यवस्था नभएको दायित्व अन्तर्गत देखाइन्छ। आ.व.२०७८/७९ को तुलनामा आर्थिक वर्ष २०७९/८० मा यस प्रकारको दायित्व ११.६३ प्रतिशतले वृद्धि भई रू. ५२ अर्ब ८७ करोड २ लाख पुगेको छ।

**तालिका ३.७ विगत पाँच आर्थिक वर्षमा कोषमा व्यवस्था नगरिएको दायित्वको अवस्था**

रकम (रू. लाखमा)

| क्षेत्र | आर्थिक वर्ष | | | | |
|---|---|---|---|---|---|
| | २०७५/७६ | २०७६/७७ | २०७७/७८ | २०७८/७९ | २०७९/८० |
| औद्योगिक | २००९१ | २४०८८ | ३२३०२ | ४००७६ | ३५६८८ |
| व्यापारिक | ७७६३ | ६७२६ | ९४७५ | २७०० | ४२३ |
| सेवा | २८५८२ | ३१४३७ | २१४७८ | ४०७८९ | ३६३९६ |
| सामाजिक | ५५३८ | ११९६२ | १३३७२ | १३८३१ | २९४४५ |
| जनोपयोगी | ३९८२७९ | ४६६७५८ | ३२०९६७ | ३५१४०२ | ३८५१२२ |
| वित्तीय | २५८२८ | ३६१२२ | १९६३२५ | २४८०२ | ४१६२७ |
| कुल जम्मा | ४८६०८१ | ५७७०९३ | ५९३९१९ | ४७३६०० | ५२८७०२ |
| वार्षिक वृद्धि/ह्रास | २५.१९ | १८.७२ | २.९२ | (२०.२६) | ११.६३ |
| पाँच आर्थिक वर्षको औषत वृद्धि | | | | | ७.६४ |

स्रोतः सम्बन्धित संस्थानबाट प्राप्त विवरण।

आर्थिक वर्ष २०७९/८० मा २२ वटा सार्वजनिक संस्थानले कोषमा व्यवस्था नगरिएको दायित्वको विवरण पेश गरेका छन्। विगत पाँच वर्षमा यस्तो दायित्व औषत ७.६४ प्रतिशतले वृद्धि भएको छ। क्षेत्रगत रूपमा जनोपयोगी क्षेत्रको यस्तो दायित्व कुल दायित्वको ७२.८४ प्रतिशत रहेको छ। सार्वजनिक संस्थानले यस्तो दायित्व वापतको रकम यकिन गरेर छुट्टै कोष खडा गरी राख्नुपर्नेमा अझै पनि कतिपय संस्थानले यस्तो व्यवस्था पालना गरेको देखिदैंन।

## ३.८ जनशक्ति व्यवस्थापन

सार्वजनिक संस्थानमा कार्यरत जनशक्ति आ.व.२०७८/७९ मा २९ हजार ७ सय ३६ रहेकोमा आ.व. २०७९/८० मा ३२ हजार १ सय ८० पुगेको छ। समीक्षा अवधिमा सबैभन्दा बढी कर्मचारी रहेका तीनवटा संस्थान क्रमशः नेपाल विद्युत प्राधिकरण (८७७५ जना), नेपाल दुरसञ्चार कम्पनी लि.(३९३० जना) र नेपाल बैंक लि.(३५९९ जना) रहेका र यी तीन संस्थानको जनशक्ति कुल जनशक्तिको ५०.६६ प्रतिशत रहेको छ। सबैभन्दा कम जनशक्ति कार्यरत संस्थानमा क्रमश बुटवल धागो कारखाना लि.(३जना), नेपाल मेटल कम्पनी (७जना) र राष्ट्रिय उत्पादकत्व तथा आर्थिक विकास केन्द्र लि.(८ जना) रहेका छन्। कर्मचारी प्रशासन सम्बन्धी नियमावली तथा विनियमावलीमा

समसामयिक परिमार्जन नहुँदा कतिपय संस्थानको पदपूर्ति प्रक्रिया रोकिएकोले न्यून कर्मचारीबाट नै कार्य सम्पादन हुदैं आएको छ।

**तालिका ३.८ विगत पाँच आर्थिक वर्षमा कार्यरत कर्मचारीको विवरण (संख्यामा)**

| क्षेत्र | आर्थिक वर्ष | | | | |
|---|---|---|---|---|---|
| | २०७५/७६ | २०७६/७७ | २०७७/७८ | २०७८/७९ | २०७९/८० |
| औद्योगिक | २१५६ | १९५९ | १९४३ | २१५० | १९८७ |
| व्यापारिक | १४४२ | १२७९ | १२४० | १३१८ | १४८६ |
| सेवा | २९६८ | २७९५ | २९६० | ३३३६ | ४५०२ |
| सामाजिक | १२५९ | १४३८ | १२८८ | १५८२ | १४०८ |
| जनोपयोगी | १३९८० | १३४०४ | १३०१० | १३१३० | १३३७७ |
| वित्तीय | ६९३३ | ७४८९ | ७५६१ | ८२२० | ९४२० |
| **कुल जम्मा** | २८७३८ | २८३६४ | २८००२ | २९७३६ | ३२१८० |
| **वार्षिक वृद्धि/ह्रास** | ०.७६ | (१.३०) | (१.२८) | ६.१९ | ८.२२ |
| **पाँच आर्थिक वर्षको औषत वृद्धि** | | | | | २.५६ |

**स्रोतः सम्बन्धित संस्थानबाट प्राप्त विवरण।**

## ३.९ लेखापरीक्षणको अवस्था

सार्वजनिक संस्थानको वित्तीय उत्तरदायित्व मापन गर्ने प्रमुख औजारको रूपमा लेखापरिक्षणलाई लिइन्छ। संस्थागत सुशासन, वित्तीय अनुशासन, वित्तीय स्वास्थ्य र कार्यसम्पादनमा प्रभावकारीता लेखापरीक्षणबाट प्रतिविम्वित हुने हुँदा यो पारदर्शिता कायम गर्ने महत्त्वपूर्ण औजार हो। कानुनले तोकेको प्रक्रिया र समय सीमा भित्रै सार्वजनिक संस्थानको लेखापरीक्षण सम्पन्न गर्न कानुनी रूपमै बाध्यकारी बनाइएको छ। तथापि, अधिकांश सार्वजनिक संस्थानले भने नियमित रूपमा लेखापरीक्षण गराएका छैनन्।२० वटा संस्थानले आ.व.२०७९/८० सम्मको लेखापरीक्षण गराएका छन् भने अन्य २४ वटा संस्थानले नियमित लेखापरीक्षण गराएका छैनन्। नेपाल ओरियण्ड म्याग्नेसाइट प्रा.लि. ले आ.व.२०६४/६५ देखि लेखापरिक्षण गराएको छैन भने राष्ट्रिय जीवन बीमा कम्पनी लिमिटेड(साविक राष्ट्रिय बीमा संस्थान) ले २०७३/७४, राष्ट्रिय बीमा कम्पनी लि. ले २०७४/७५, विशाल बजार कम्पनी लिमिटेडले २०७५/७६ र गोरखापत्र संस्थान, जनक शिक्षा सामाग्री केन्द्र लिमिटेड, नेपाल रेल्वे कम्पनी लि. ले आ.व.२०७७/७८ देखिको लेखापरिक्षण गराएका छैनन्। त्यस्तै अन्य १७ वटा संस्थानले आ.व.२०७८/७९ सम्मको मात्र लेखापरीक्षण गराएका छन्।

**तालिका ३.९ आर्थिक वर्ष २०७९/८० सम्मको लेखापरीक्षणको अवस्था**

| क. औद्योगिक क्षेत्र | | अन्तिम लेखापरिक्षण भएको आ.व. | NFRS लागु भए/ नभएको | कैफियत |
|---|---|---|---|---|
| १ | दुग्ध विकास संथान | २०७८/७९ | प्राप्त नभएको। | |
| २ | जडिबुटी उत्पादन तथा प्रशोधन कम्पनी लि. | २०७८/७९ | प्राप्त नभएको। | |
| ३ | हेटौंडा सिमेन्ट उद्योग लि. | २०७८/७९ | प्राप्त नभएको। | |

| | | | | |
|---|---|---|---|---|
| ४ | जनकपुर चुरोट कारखाना लि. | २०७६/७७ | प्राप्त नभएको। | |
| ५ | नेपाल औषधि लिमिटेड | २०७८/७९ | प्राप्त नभएको। | |
| ६ | उदयपुर सिमेन्ट उद्योग लि. | २०७८/७९ | प्राप्त नभएको। | |
| ७ | नेपाल ओरिण्ड म्याग्नासाइट प्रा.लि. | २०६४/६५ | प्राप्त नभएको। | |
| ८ | बुटवल धागो कारखाना लि. | २०७९/८० | लागु नभएको। | |
| ९ | नेपाल मेटल कम्पनी लि. | २०७९/८० | लागु नभएको। | |
| १० | धौबादी फलाम कारखाना. | २०७९/८० | लागु नभएको। | |
| **ख. जनोपयोगी क्षेत्र** | | | | |
| १ | नेपाल खानेपानी संस्थान | २०७८/७९ | प्राप्त नभएको। | |
| २ | नेपाल विद्युत प्राधिकरण | २०७९/८० | लागु भएको। | |
| ३ | नेपाल दूरसञ्चार कम्पनी लि. | २०७९/८० | लागु भएको। | |
| ४ | विद्युत उत्पादन कम्पनी लि. | २०७९/८० | लागु भएको। | |
| ५ | राष्ट्रिय प्रसारण ग्रीड कम्पनी | २०७९/८० | लागु भएको। | |
| **ग.व्यापारिक क्षेत्र** | | | | |
| १ | कृषि सामग्री कम्पनी लि. | २०७८/७९ | प्राप्त नभएको। | |
| २ | नेपाल आयल निगम लि. | २०७९/८० | लागु भएको। | |
| ३ | नेपाल वन निगम लि. | २०७८/७९ | प्राप्त नभएको। | |
| ४ | खाद्य व्यवस्था तथा व्यापार कम्पनी लि. | २०७८/७९ | प्राप्त नभएको। | |
| **घ.वित्तीय क्षेत्र** | | | | |
| १ | कृषि विकास बैङ्क लि. | २०७९/८० | लागु भएको। | |
| २ | राष्ट्रिय बीमा संस्थान (हाल राष्ट्रिय जीवन बीमा कम्पनी लिमिटेड) | २०७३/७४ | प्राप्त नभएको। | |
| ३ | राष्ट्रिय बीमा कम्पनी लि. | २०७४/७५ | प्राप्त नभएको। | |
| ४ | राष्ट्रिय वाणिज्य बैङ्क लि. | २०७९/८० | लागु भएको। | |
| ५ | निक्षेप तथा कर्जा सुरक्षण कोष | २०७९/८० | प्राप्त नभएको। | |
| ६ | नेपाल स्टक एक्सचेन्ज लिमिटेड | २०७९/८० | प्राप्त नभएको। | |
| ७ | नागरिक लगानी कोष | २०७८/७९ | प्राप्त नभएको। | |
| ८ | हाइड्रोइलेक्ट्रिसिटी इन्भेष्टमेन्ट एण्ड डेभलपमेन्ट कम्पनि लिमिटेड | २०७९/८० | लागु भएको। | |
| ९ | नेपाल बैङ्क लि. | २०७९/८० | लागु भएको। | |
| **ङ. सामाजिक क्षेत्र** | | | | |
| १ | सांस्कृतिक संस्थान | २०७९/८० | लागु नभएको। | |
| २ | गोरखापत्र संस्थान | २०७७/७८ | प्राप्त नभएको। | |
| ३ | जनक शिक्षा सामग्री केन्द्र लि. | २०७७/७८ | प्राप्त नभएको। | |
| ४ | नेपाल टेलिभिजन | २०७८/७९ | प्राप्त नभएको। | |
| ५ | राष्ट्रिय आवास कम्पनी लि. | २०७८/७९ | प्राप्त नभएको। | |
| **च.सेवा क्षेत्र** | | | | |
| १ | औद्योगिक क्षेत्र व्यवस्थापन लि. | २०७९/८० | लागु भएको। | |
| २ | नेशनल कन्स्ट्रक्सन कम्पनी नेपाल लि. | | | |

